# प्राकृत पोखरा

(वर्णनात्मक-काव्य)

मुकुन्द शरणउपाध्याय



लेखक: मुकुन्दशरण उपाध्याय
प्रकाशक : साझा प्रकाशन
प्रथम संस्करण: २०२१
दोस्रो संस्करण: २०३०
तेस्रो संस्करण: २०५२ (साझा प्रकाशनबाट दोस्रो पटक)
आवरणकला: टेकवीर मुखिया
प्रति: २१००
मूल्य: २१/-
मुद्रक: सञ्जीवनी प्रेस, वटु फलिकेव काठमाडौं

# दोस्रो संस्करणमा दुई शब्द

जब म कहिलेकहीं पोखराको बिहानीमा ब्युँझेर माछापुच्छ्रे तिर फर्कन्छु, मलाई लाग्छ—मेरा कवितामा माछापुच्छ्रेको सौन्दर्य धेरै अधूरो छ। यस दिव्य हिमालयको सौन्दर्य एक कुनाबाट हेरेर कहाँ सकिने कुरा हो र ? तर धेरैजसो मान्छे एकै ठाउँबाट र एकै बिहानीबाट मात्रै त्यसलाई हेरेर फर्किदिन्छन्। मलाई लाग्छ, माछापुच्छ्रे मात्र होइन—यहाँका अन्नपूर्णा र धौलागिरि हिमालहरू, फेवा तालहरू र सेती नदीहरू सबमा नित्य नूतनता र नैसर्गिक विचित्रता छ, जसले गर्दा पोखराको प्राकृतिक सौन्दर्य आत्मसात् गर्ने दर्शकहरूमा एकै ठाउँबाट एकै क्षणमा विभिन्न भावानुभूति भै दिन्छन्। यसैले यस संस्करणमा मलाई एउटा कविता थप्न मनलागेको छ—

'यात्री ! मिल्काऊ यो काव्य, हेर्न आऊ स्वयं छिटो।
लेखेको पोखरा भन्दा देखेको पोखरा मीठो ।।'

साझा प्रकाशनका सौजन्यले नयाँ काँचुली फेरेर पाठकहरू-का सेवामा आउन पाएको यस द्वितीय संस्करणमा पहिलो संस्करणमा हतारवश रहन गएका एक–दुई त्रुटिलाई सच्याएको छु र कताकति एक दुई कविता पनि थपेको छु, जसमध्ये एउटा कविता माथि पढिसक्नु भयो।

आदरणीय पाठकहरूलाई थाहै छ कि नेपालको अत्यन्त महत्वपूर्ण साहित्यिक संस्था 'मदन पुरस्कार' गुठीले यसलाई २०२१ को मदन पुरस्कार प्रदान गरेको छ। उदीयमान लेखकको

यस प्रथम काव्यकृतिलाई त्यति ठूलो सम्मान प्रदान गरेर गुठीले निश्चय पनि लेखकलाई काव्यसिर्जनप्रति प्रेरणा प्रदान गर्न खोजेको छ, जसका लागि म चिर ऋणी छु।

यसलाई सर्वप्रथम पाण्डुलिपिबाट मुद्रित पुस्तकका रूपमा जन-समक्ष ल्याउन स्वर्गीय श्री ५ महाराजधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट बक्सेको प्रेरणा, शुभाशीर्वाद र रु. १००० को आर्थिक बकसका लागि म अत्यन्त आभारी छु। कविराजा मौसुफको स्वर्गीय आत्माप्रति यहाँ पनि म हार्दिक निष्ठा व्यक्त नगरी रहन सक्तिन।

अन्त्यमा साझा प्रकाशनप्रति जसले (यसलाई द्वितीय संस्करणद्वारा प्रकाशित गरिदियो) म हार्दिक कृतज्ञता व्यक्त गर्दछु।

—लेखक

२०३०

## क्रम

# प्राकृत पोखरा



## नेपाल

सधैं हाँसिरहे जस्ती सधैं पूर्ण हरा - भरा ।
परमेश्वरकी प्यारी छोरी हुन् यी वसुन्धरा ।।

अनेकौं देशका राम्रा गहना यी लगाउँछिन् ।
नेपालको अती राम्रो 'शिरबिन्दु' बनाउँछिन् ।।

अनन्त रत्नले पूर्ण शुद्ध, शान्त र शोभन ।
'श्रीबिन्दु' यिनको यो छ सृष्टिको पनि भूषण ।।

देवता 'स्वर्ग' हो भन्छन् 'बगैंचा' भन्दछन् चरा ।
मान्छे 'यो देश हो' भन्छन् 'टीकी हो' भन्दछिन् धरा ।।

दिव्य प्रकृति साम्राज्य विश्वमा अब यत्ति छ ।
न निभेको कुनै वेला जहाँ सौन्दर्य बत्ति छ ।।

सानो भै पनि यो देश विश्वमा छ विशेषको ।
कहिल्यै फहराएन यहाँ झण्डा विदेशको ।।

शुद्ध कञ्चन गम्भीर यसका इतिहास छन् ।
वेद वेदान्त गीताका यहाँ हास विलास छन् ।।

विश्वमा वैदिकी झण्डा यहीं नै फहराइयो ।
विश्वमा शान्ति सन्देश यहीं बाटै सुनाइयो ।।

यहीं मानवता जन्म्यो यहीं मानवता बढ्यो ।
छोरी झैं वयैं गयो अन्त छोरा झैं वयैं यहीं बस्यो ।।

उदार दरिलो यो छ, यो छ आदर्श विश्वको ।
यहीं जन्म लिई जाग्यो सिद्धान्त पञ्चशीलको ।।

तीर्थ, धाम, नदी क्षेत्र, पुरी, पुण्य सरोवर ।
निहार आदिको यो छ सधैं सुन्दर आकर ।।

पार्वती भृकुटी सीता जस्ता छोरी यहीं भए ।
विश्व - नारीत्वका निम्ति जो आँफै पनि मेटिए ।।

राज - पुत्र यहाँ जन्मे श्रीबुद्ध भगवान् सरी ।
राजा जनक झैं जन्मे ज्ञानी, त्यागी, दृढव्रती ।।

वनै पिच्छे तपोभूमि भूमि पिच्छे महामुनि ।
मुनि पिच्छे सदाचार कहीं छ त यहीं छ नि ।।

हिन्दुमा बौद्धमा छैन यहाँ द्वेष कतै पनि ।
दुबैबाट बनेकाछन् दुवै आदर्शका धनी ।।

सम्प्रदाय हजारौं छन् वृक्ष - शाखाहरू सरी ।
नेपालीपन यौटै छ वृक्षका मूलकै सरी ।।

यहाँ कलह देखिन्न सम्प्रदाय र वादको ।
सम्प्रदाय भनी लड्नु यहाँको अपराध हो ।।

मान्छन् निर्भीक नेपाली यौटै ईश्वरको डर ।
पर्छन् स्वतन्त्र नेपाली यौटै ईश्वरको भर ।।

राज-नीति यहाँ नित्य चोखो नेपालवाद छ ।
धर्म नीति परापूर्व देखि अध्यात्मवाद छ ।।

प्रजा दुःखी हुँदा राजा राजा दुःखी हुँदा प्रजा ।
झर्दछन् गहमा आँसु हो यहाँको यही प्रथा ।।

कस्तूरी, चमरी, अर्ना, हात्ती, गैंडा, मयूरका ।
यहाँका वनमा हुन्छन् सभा स्वच्छ विचारका ।।

लाली गुराँसका फूल यहाँ सौन्दर्य भर्दछन् ।
डाँफे चरीहरू नाची आनन्दीमघु छर्दछन् ।।

छन् यहीं विश्व विख्यात राम्रा र उच्च पर्वत ।
जता हेर्‍यो उतै राम्रो छ यस्को दृढ गौरव ।।

पछी हटेन यो देश मित्रमा गुन लाउन ।
विश्वका वैरिको गर्व घुला मित्र मिलाउन ।।

कलामा विश्वकै सामू आफ्नो धाक जमाउन ।
हिमालमा चढी पैल्हे पताका फर्फराउन ।।

बँचायो विश्वमा यस्ले सार्व- भौमत्व-वैभव ।
आफ्नो सँस्कृति पालेर राखेर आत्म-गौरव ।।

पहिल्यै जाइलागेन अर्कामाथि कुनै दिन ।
आएमा बाँकिराखेन शत्रुलाई कुनै छिन ।।

विश्वजेता कती आए लड्न पारेर अक्कर ।
कुनै भित्र बनी फर्के कुनै खाएर ठक्कर ।।

हावा चीसो जलै चीसो चीसो पर्वत पाटन ।
शत्रू आए भने सान्है छ तातो रक्तको कण ।।

महिषासुरको सातो खाइथिन् शक्तिले यहीं ।
शुम्भ निशुम्भको रक्त बगेथ्यो छलली यही ।।

वीर - प्रसविनी भूमि कलिकी मात्र होइनन् ।
सत्यादिमा पनी यिन्ले हारको नाम छोइनन् ।।

पूजिइन्छन् अरु देश - रङ्गी चङ्गी प्रचारले ।
यो आँफै पूजिएको छ शुद्ध शान्त विचारले ।।

यहाँ छन् सुन चाँदीका खानी जगमगाउँदा ।
हर्छन् अमृतको गर्व यहाँका जलका बुँदा ॥

जलै मीठो फलै मीठो मीठो पवन भोजन ।
जता हेऱ्यो उतै मीठो छ यो नेपाल शोभन ॥

देशीय अथ जातीय प्रान्तीय भावना न ली ।
निष्पक्ष लेखनी द्वारा यदि लेख्छ कुनै कवि ॥

दिव्य सौन्दर्यले पूर्ण होला नेपाल शीर्षक ।
काव्य - वस्तु हुनन् कुञ्ज छहरा हिम - पर्वत ॥

'रामराज्य' नबिर्सेको यहाँ साम्राज्यवाद छ ॥
'शुनि चैव श्वपाके च' गीताको साम्यवाद छ ॥

हिन्दु - राष्ट्र छ यो राम्रो एकता छ परस्पर ।
राजा छन् सबका साजा सबै रैती बराबर ॥

यहाँका जनता जप्छन् राष्ट्र मन्दिरमा बसी ।
"जननी जन्म भूमिश्च स्वर्गादपि गरीयसी" ॥

यहाँका छहरा गर्छन् व्याख्या वेदान्त सूक्तिको ।
यहाँका कुञ्जमा मिल्छ शान्ति कैवल्य मुक्तिको ॥

राम्रा शान्त र निर्भीक नेपाली जनता सब ।
दाँजिन्छन् स्वर्गका राम्रा तेजिला देवतासँग ॥

पाएर हिमको हावा पिएरै हिमको जल ।
बसेर हिमका काख नेपाली बन्छ शीतल ॥

छैनन् यहाँ महाखाडी, काला पानी मरुस्थल ।
न भएका कुरालाई नेपाली छैन भन्दछ ॥

यो पाणिनि तपोभूमि यहाँ केको कमी छ र ? ।
विश्व साहित्यकै निम्ति हो यो ईश्वरको वर ॥

राजा प्रजा सँगै हाँस्ने गर्ने सम्मान विश्वको ।
लडाञी खेल हो ठान्ने चलित हो यस देशको ।।
युद्धमा डरले भाग्नु,क्षमा माग्नु अरूसँग ।
अर्काका भरमा जाग्नु दाग्नु पर्थ्यौलि-गौरव ।।
स्वार्थका डरले हेर्नु ज्यूँदै राष्ट्रिय दुर्गति ।
स्वप्नमा पनि जान्दैन नेपाली पनले यति ।।
पञ्चायती प्रजातन्त्र चलाएर धमाधम ।
क्या राम्रो सँग थाम्दै छ अझै यो निगमागम ।।
तटस्थ नीति पालेर विश्वमा मित्रता गरी ।
चलेको छ नि यो देश हाते मालो गरी गरी ।।
यसको उत्तरी साँध अति राम्रो हिमाल छ ।
कोटि मानवका जस्तै जस्को छाती विशाल छ ।।
यस्तै दक्षिणमा फाँट तराईको विशाल छ ।
कोटि मानवका निम्ति जो सधैं सहकाल छ ।।
यस्तै मेची महाकाली पूर्व-पश्चिम साँध छन् ।
कोटि मानवका प्यारा जो सधैं तीर्थ धाम छन् ।।
काठमाडौं नयाँ स्वर्ग राजधानी छ सुन्दर ।
देवले नै बनाएछन्! जहाँ किल्ला सबै तिर ।।
कुबेरले सिगारेको हीरा मोती छरी छरी ।
पुराण कालको हो यो प्रसिद्ध अलका पुरी ।।
यस्को चन्द्र तथा सूर्य क्या उजेली निशान छ
विश्व मेरो सबै मित्र क्या मिठो अभिमान छ ।।
अविरल नदि नाला गान गर्छन् डलेर ।
गिरि परिकर लाखौं छन् बसेका मिलेर ।
शिव धनु सरि लाम्चे स्वर्गको यो धरा छ ।
हृदय सरि यसैका माझमा पोखरा छ ।।

❀ प्रथम सर्ग ❀

# पोखरा

नेपाली नामकी 'टीकी' पैन्हिन्छिन् जो वसुन्धरा ।
त्यै टीकीको पनी 'टिकी' हो यो सुन्दर पोखरा ।।
प्रसिद्ध छन् यहाँ ताल शुक्ला–गंगा र मुन्तला ।
कविता कल्पनाको छ यहीं माधुर्यको कला ।।
खेत–बारी नदी–नाला यहाँका जति दृश्य छन् ।
हेर्दछन् हाँस्तछन् बोल्छन् सबैलाई भुलाउँछन् ।।
राम्रो भै पनि यो छैन विश्व विख्यात बेसरी ।
अमूल्य बुद्धि पाएका निधनी कविता सरी ।।
धेरै कवि यहाँ जन्मे गरेनन् तर वर्णन ।
यी आँखा अरू नै देख्छन् देख्दैनन् नि स्वयं कन ।।
अथवा कवि जस्ताले अभिमानी सरी बनी ।
जननी जन्मभूमीको के लेखुन् ? दिव्य जीवनी ।।
अहा ! भनुन् भनी ठानी लिन्न हो पोखरा छवि ।
प्रसिद्ध हुनका निम्ति लेख्तैनन् कविता कवि ।।
सुन्दरी जनको ज्यादै गर्दा वर्णन प्रेमले ।
घुमी यो पोखरा हेर्न पाएनन् कालिदासले ।।
नत्र यौटा महाकाव्य उहिल्यै लेखिने थियो ।
संसारमा महान् ख्याति पोखराको हुने थियो ।।

अथवा अति सौन्दर्य पाएर कविको मन ।
देखनै मस्तभो नित्य कत्ति पाएन लेखन ।।

छवटै ऋतुको वास यहाँ देखिन्छ सुन्दर ।
ऋतुको राजधानी यो विश्वमा छ मनोहर ।।

छ भने पाउने इच्छा पुरुषार्थ चतुष्ठय ।
आएर भइ निश्चिन्त पोखरा घुमने गर ।।

यहाँका जलवायूले देहस्फूर्ति बढाउँछ ।
धर्मार्थ–काम औ मोक्ष देहवाला कमाउँछ ।।

शोभा काश्मीरकै यद्वा यद्वा नन्दनवागको ।
यहाँ कुना–कुनामा छ फ्याँकिएकै समानको ।।

हो यो दिव्य तपोभूमि मुनि कश्यप आदिको ।
घरै स्वर्ग चढै पाई संग यै पुण्य भूमिको ।।

तपस्या गर्न जाँदैमा पोखरा दिन्छ यो वर ।
मन्द मन्द मिठो हावा मिठो पानी मिठो सर ।।

कोइलीको सुन्यो गीत हेऱ्यो प्रकृतिका छवि ।
छहराको पियो पानी ताप्यो निर्मल कौमुदी ।।

गायो लहडको गाना सुँघ्यो सौरभ पुष्पको ।
पायो स्वर्गीय आनन्द पोखरामा जसै पुग्यो ।

कतै ताल कतै साल कतै माल विचित्रका ।
देखदा देखने मान्छे स्वयं हुन्छन् विचित्रका ।

शुक्लाको दृश्य उस्तै छ उस्तै दृश्य छ तालको ।
हिमको दृश्य उस्तै छ अति सुन्दर चालको ।।

कुन दृश्य कता हेर्नु कुन छोड्नु कसो गरी।
यसैले हेरने मान्छे टोलिन्छन् बीचमा परी ।।

उता हिमाल चम्किन्छ त्यता शुक्ला मुसाउँछिन् ।
यता यी पोखरा-लक्ष्मी हाँसी हाँसी रमाउँछिन् ।।

शुक्लाको घून अर्कै छ अर्कै घून छ तालको ।
कविको घून अर्कै छ पोखरा छ अचम्भको ।।

स्वच्छ हावा बहेको छ लिई सौरभ पुष्पको ।
पोखरा पोखरा हैन बगैंचा हो नि विश्वको ।।

बने पर्वत पर्खाल गण्डकी नै बनिन् कुलो ।
लता-वृक्ष बने फूल ताल नै पोखरी भयो ।।

नर नारी मिली खेल्ने बने पाटन पाटन ।
पोखरामा मिलेकाछन् बगैंचाका सबै गुण ।।

जस्तो छ पोखरा त्यस्तै भन्न खोज्ने भने पनि ।
सुन्नेका मनले भन्ला सुनियो काव्यको ध्वनि ।।

यसको लेख्न पर्दैन काव्य या चित्र वास्तव ।
पोखरा छ स्वयं काव्य स्वयं अद्भुत चित्र छ ।।

कविता लेखने ढंग कविलाई बताउँछ ।
चित्रकार स्वयंलाई चित्रतुल्य बनाउँछ ।।

तराई झैं छ मैदान ठण्डा लेक समान छ ।
अप्राप्य गुण पाएको पोखरा अभिराम छ ।।

छन् यहाँ पदलालित्य उपमा अर्थ गौरव ।
पोखरा हेर्न जानेमा माघकाव्य समान छ ।।

कहीं हिमाल मात्रै छन् कहीं ता ताल मात्र छन् ।
कहीं पहाड मात्रै छन् कहीं मैदान मात्र छन् ।।

कहीं छन् छहरा मात्रै पहरा कहीं केवल ।
नदी मात्रै कहीं बग्छन् कहीं छन् खालि जंगल ।।

सम्पूर्ण दिव्यशोभाले पूर्ण छैनन् कहीं धरा ।
तर सम्पूर्ण–शोभाले परिपूर्णछ पोखरा ।।
सुगन्धी सुनमा भर्न, उखूलाई फलाउन ।
श्रीखण्डवृक्षमा राम्रा राम्रा फूल फुलाउँन ।।

बिर्सने सृष्टि कर्ताले पोखरा यो बनाउँदा ।
कुनै तत्व भुले जस्तो शंका लाग्दैन जाँचदा ।।

नेपाल एशिया यद्वा यदवा मानव मात्रको ।
गहनाहैन यो भूमि हो अलङ्कार विश्वको ।।

सबै पृथिविका छोरा यसका हकदार हुन् ।
जनेली रातको शोभा सबैले हेर्न पाउँछन् ।।

यसै नेपाल–आमाको मुटु जस्तो छ पोखरा ।
उसैमा पनि नक्शामा माझमा पर्छ यो धरा ।।

हिमाल, वन ओ शुक्ला ताल पङ्कज सुन्तला ।
यिनै अङ्ग मिली बन्छ अतिसुन्दर पोखरा ।।

सेतीको तट आयो कि गीत आफै मुसाउँछ ।
हिमाल देख्न पायो कि भाव आफै उदाउँछ ।।

तालको छाल उर्ल्यो कि मन आफै रमाउँछ ।
पोखरा आउन पर्छ शान्ति आफै पछ्याउँछ ।।

यौटा यौटा गरी हेरौं अब सुन्दर पोखरा ।
रऊँकै पनि देखिन्नन् एकै चोटि दुई सरा ।।

(चञ्चले गाजलु आँखा हँसिलो मुख मण्डल ।
उठेको पोटिलो छाती बाँएले कटि अञ्चल ।।

रसिलो ओंठको लाली कसिलो वचनामृत ।
फिफिरे पातलो सारी जे हेऱ्यो उहि रम्यछ) ।।

सेतो झल्कीरहेको हिमगिरि-परिखा कल्प पैल्हे मनैमा।
काखैमा यो हिमैकाअतिशय हरिया घुम्न जाऊँ वनैमा
शुक्ला गङ्गा र फवा कमल र गुलिया सुन्तलालाई सम्झ
चाहिन्नन् काव्य कोही अनि त हृदय नै पोखरा काव्य बन्छ

## द्वितीय सर्ग

# माछापुच्छ्रे

जस्तो सगरमाथा छ विश्वमै उच्च पर्वत ।
त्यस्तै यो पोखरा भित्र माछापुच्छ्रे हिमाल छ ।।
काखमा पोखरा राखी चोरेर कविको मन ।
यो हिमाल बसेको छ छाता तुल्य बनीकन ।।

नेपालकै बनेकोछ माला, किन्तु हिमालय ।
शोभा भिन्नै यहाँ मिल्छ दिव्य, आनन्द, चिन्मय ।।
यो राम्रो पोखरा हेर्न आउँछन् जब दर्शक ।
गर्छ स्वागत हाँसेर माछापुच्छ्रे हिमालय ।।

"आफ्नै हो घर यो साथी ! आउनूहोस् मरासर ।
कला ईश्वरको हेर्नोस् ! पढ्नोस् प्रकृति अक्षर ।।
लता मण्डपमा बस्नोस् ! गंगामा गै नुहाउनोस् ।
मीठा छन् सुन्तला खानोस् ! योग्य सेवा बताउनोस् ।।

यी दुबाका गलैंचा छन् लेट्नहोस् थाकनूभए ।
पिएर छहरे पानी मेट्नुहोस् प्यास क्यै भए ।।
सुन्नुहोस् गान पन्छीको कति आनन्द भर्दछ ।
भन्लाभैं मुस्कुराएर आउनेलाई हेर्दछ ।।

यस्तै स्वागत पाएर डुबे हर्ष समुद्रमा ।
पाहुना जो जती आए हिमका दरबारमा ।।
देखी मुसुक्क हाँसेर हेरेको यो हिमालय ।
को न भन्ला चिनाजानी थियो पैल्यै यिनीसँग ।।

चञ्चो सलक्कको यौटै देखिन्छ तलबाट त ।
उडर माथिगै हेर्दा माछापुच्छ्रे त नाम छ ॥
वामांगमा हिमानीका अर्ध चन्द्रकला सरी ।
सिकारु चित्र कारीले लेखे जस्तो छ माधुरी ॥

डग्दैन र छ यो सत्यं मुख दिन्छ शिवं छ यो ।
राम्रो छ सुन्दर हो यो हाम्रो आदर्श यै त हो ॥
यो दिव्य पोखरालाई जे पैन्हायो बिलाउँछ ।
माछापुच्छ्रे भने टोपी असाध्यै नै सुहाउँछ ॥

कर्के टोपी लगाएर नेपाली जब हाँस्तछ ।
माछापुच्छ्रे हिमालैको उपमा हुन पाउँछ ॥
चुच्चे राष्ट्रिय भण्डाको टोपी पैन्हेर शोमन ।
माछापुच्छ्रे अहा !! हेर्छ गम्कँदै ताल दर्पण ॥

यो हिमालय मस्कन्छ देखेर आफनै छवि ।
पढेर कविता आफ्नै आफै हाँस्छन् महाकवि ॥
झल्काई गहना दिव्य पैन्ही सिन्दूर भालमा ।
हाँस्तछन् षोडशी बाला जसरी मृदु चालमा

त्यसरी सूर्यका राता पैन्हेर किरणावली ।
बिहानै हाँस्तछिन् शोभा माछापुच्छ्रे हिमालकी ॥
अथवा तालको माछो माछापुच्छे हिमाल यो ।
पोखरा हेर्नका निम्ति उफ्री पर्वतमा पुग्यो ॥

यो मीठो दृश्य देखेर कत्ति चाहेन फर्कन ।
गाड्यो मुख धरा तर्फ खोल्साको जल खोजन ॥
प्यारो प्रकृतिको भक्त आत्तियो प्यासले भनी ।
निस्किइन् गण्डकी सेती छेडेरै पृथिवी पनी ॥

अथवा हैन यो माछो हो श्रीपेच हिमालको ।
विना राजा कहाँ बाँच्थ्यो रत्नको परखाल यो ?

भयो प्रकृतिका राजा तिमी नै अजरामर ।
श्रीपेच पैन्हू यो छैन विश्वमा यो बराबर ।।

भनी निश्चय ब्रह्माले पैन्हाए शिर पेच यो ।
न भए हिमको डाँडो कसरी गिरि–राज भो ??

हिमालले छ यो देश अमूल्य माल पाइने ।
जहाँ हिमालनै छैन उहाँ माल कहाँ हुने ? ।।

चीन–भारतको चित्र एकै चोटि लिने सरी ।
हिमाल यो डटेको छ साह्रै अग्लो बनी वरी ।।

बिहानै नीद छोडेर हेर्छ उच्च हिमालमा ।
आँफै पाउँछ नेपाली यसैले उच्च भावना ।।

कसैको सङ्ग खाडी छ कसैको मरुभूमि छ ।
कसैको सङ्ग अर्कै छ हाम्रो सङ्ग हिमाल छ ।।

जस्ता सङ्गतमा जन्म्यो जस्ता सङ्गतमा बढ्यो ।
उस्तै बन्दछ यो जीव सङ्ग नै मुख्य वस्तु हो ।।

यसैले सब नेपाली सङ्ग झैं हिम पर्वत ।
स्वच्छ, शान्त र गोरा छौं भावना पनि उच्च छ ।।

सहजै विजयी हुन्छौं हिम–पर्वत उक्लँदा ।
हिमाल झैं डटेकै छौं आफ्नै संस्कृतिमा सदा ।।

हाम्रा हृदयमा बग्छन् दयाका छहराहरू ।
यसैले हिम झैं ठूलो सङ्ग छैन कुनै अरू ।।

त्यो हिमालय हाम्रो हो हाम्रै हो त्यो हिमाचल ।
त्यो रत्नगिरि हाम्रो हो भन्दैमा सुख मिल्दछ ।।

यहाँ भन्दा पनि ठूलो कुन भाग्य हुनु ग्रहो !
त्यत्रो हिमाल 'हाम्रो हो' भनी जो लेरुन पाइयो ।।
धन्य तिम्रो कृपा यत्रो सकेछौ पर्वतै दिन ।
हे विधाता ! म चाहन्न यहाँ भन्दा धनी हुन ।।

ग्रथवा हिमको काख जसको दरबार छ ।
त्यस्ता नेपाल वासीको महिमा नै ग्रपार छ ।।

'यो विचित्र खडा सेतो के होला हिम- पर्वत ?
बने हो कसरी कैल्हे ?' देख्यो कि तर्क उठ्दछ ।

ग्रलङ्कार स्वयं बन्छन् रस ग्राँफै उदाउँछ ।
ग्रनेकौं कल्पना उठ्छन् कविता फुरिग्राउँछ ।।
यहीं पूज्य जगन्माता पार्वती जन्मिइन् ग्रघि ।
संझ्यो कि मनमा उठ्छ देश गौरवता ग्रति ।।

सेता दबारमा दौडी हाँसिहुन् ग्रघि पार्वती ।
देखाई गिरि हाँसेहुन् सेतै दाँत ग्रली कति ।।

पार्वती खेलने भूमि बनाएर हिमालले ।
सजाएछन् कि यो देश सुनका परखालले ।।

चाँदीको भित्र खानी छ चिन्दैनन् कि मनुष्यलें ।
भनी बान्की दलेछन् कि यहाँ सृष्टि विधातृले ।।
कित यो विश्व कर्माको पछिल्लो शिल्प हो यहीं !
पोखे सौन्दर्य सम्पूर्ण देखुन् मानवले भनी ।।
कि त नेपाल माताको हो यो श्रीपेच सुन्दर !
गम्केर विश्वमा भन्छ यहाँ केको कमी छ र ??
फोरेर ईट चाँदीको सिमन्टी सुनको गरी ।
चिनेछन् कि विधाताले यो रत्नै रत्नको पुरी ।।

जे होस् न सकिएको छ यसमा धन विश्वका ।
जता ततै गडेको छ सम्पत्ति परमेशको ।।

यति सस्तो छ सम्पत्ति यदि तिम्रो महेश्वर ।
कविको कविता छाप्न अबदेखि दिने गर ।।

लुकेको जति सम्पत्ति कविको हातमा भए ।
अनेकौं वाल्मिको' व्यास राष्ट्रमा देखिने थिए ।।

विधाता ? अनि ता तिम्रै कीर्ति बढथ्यो जगतभरी ।
पाएन छौ यती होश बिगार्‍यौ काम बेसरी ।।

दिएनौ रति सम्पत्ति बनायौ निर्धनी तर ।
लेख्तछन् महिमा तिम्रै धन्य हुन कवि ईश्वर ।।

विना पैसा पनी काम चल्न सक्ने भए पछि ।
खर्चन्थ्यौ किन सम्पत्ति ? बाठाछौ मनका अति ।।

अथवा तिमिले सोच्यौ धन धेरै दिऊँ भने ।
बनलान् धनमै मस्त छोडलान् काम लेखने ।।

यदि यै हो भने भै गो ठीकै हो परमेश्वर ।
दुःख शोक विना भित्री कविता कुन लेख्छ र ? ।।

फुट्तछन् मनका भाव दुःखले आत्तिए पछि ।
कि मान्छे हुन्छ पग्लाहा कि हुन्छ बढिया कवि ।।

पग्लाहा मुखले बोल्छ अलौकिक कुराहरू ।
कवि लेखी उही भन्छ अफ थप्छ कुरा अरू ।।
देखेर छहरा हाँस्नु नाच्नु देखी हिमालय ।
गाउनू पक्षिका साथै नमानी लोकको भय ।।
अन्यायमा रुनू आफै चिच्याउनु समाजमा ।
धेरै एकान्तमा बस्नु हिड्नु सन्मार्ग खोजमा ।।

दुवैको यत्ति हो काम कवि पागलको तर ।
एउटा कविजी बन्छ एउटा बन्छ पागल ।।

भै गयो विधिको चल्ती को हटाउन सक्छ र !
यो हिमाल विना यस्तो कविता पनि उठ्छ र ?।।

थाक्ने छैन नि नेपाली पोखेर भावना अनि ।
टल्केको हिम देखर लेखेर कविता पनि ।।

पाएर हिमको साह्रै उज्यालो मोहिनी छवि ।
चित्र लेखा कती जन्मे कति लाटा भए कवि !!

पोखराको नियालेर शोभा स्वच्छ र सुन्दर ।
पग्लेका हृदयी जस्तै पग्लेको छ हिमालय ।।

पहिल्यै सूर्यको कान्ति पर्छ स्वच्छ हिमालमा ।
अध्यात्मवाद झुल्के झैं पहिल्यै नयपालमा ।।

टल्किन्छन् हिमका राशि सूर्यका किरणै परी ।
हीरा-मणि जडाएको राजाको मुकुटै सरी ।।

चन्द्रकान्ति परी जस्तै चन्द्रकान्त रसाउँछ ।
सूर्यकान्ति परी त्यस्तै गिरि यो टल्पलाउँछ ।।

अथवा सूर्यका रश्मि स्वच्छ पर्वतमा परी ।
देखिन्छन् धर्म सापेक्ष्य राजनीतिकला सरी ।।

कि हुन्छ हिमको कान्ति सूर्यका कान्तिले गरी ।
सुनचाँदी पगालेर एकै ठाउँ मिसे सरी ।।

जानू सगरमाथामा देखन उच्च हिमालय ।
बिहानै पोखरा जानू देखन स्वच्छ हिमालय ।।
गण्डकी छन् सबै ठाउँ एउटै जल हो तर ।
श्री मुक्तिनाथमा जस्तो अन्त माहात्म्य मिल्छ र ? ।।

हिमपर्वत चम्कन्छ अरुणोदयले गरी ।
पोखरा नगरी भन्छ म भएँ सुनको पुरी ।।

साँच्चैनै सुनको ज्योति के त्यस्तो हुनपाउला ?
टल्केका हिमका साम् उपमा कुन आउला ? ।।

अरुणोदयको शोभा यै हिमालय पाउँछ ।
अलङ्कार लगाएको युवतीमै सुहाउँछ ।।

पूर्वी आकास रातिन्छ पहेंलिन्छ हिमालय ।
सेतिन्छन् शीतका दाना जब भो अरुणोदय ।।

बिहानी सूर्यको ज्योति जब नाच्छ हिमालमा ।
कविको कल्पना पुग्छ दौडेर चलचित्रमा ।।

चलने चित्रको ज्योति पर्दामा झल्किए सरी ।
सूर्यका हिममा पर्छन् चञ्चले किरणावली ।।

पर्दा हिमाल टाँगेर सूर्यको बिजुली सरी ।
सूत्रधार विधाताले खेल झिक्छ थरी-थरी ।।

घरी नेपालबासीको वीरता चित्र झिक्तछ ।
घरी नेपालको मीठो दृश्य चित्र घुमाउँछ ।।

घरी नेपालको सीमा भन्छ यस्तो छ दुर्गम ।
घरी लौ कवि हो ! (भन्छ) बढिया कविता गम ।।

घरी देखाउदै राम्रो अन्न पूर्णा हिमालय ।
भन्छ नेपालका निम्ति छैन वय अन्नको भय ।।

घरी भन्दछ संसार जता जाओस् तिमी भने ।
नेपाली हो ! सधैं यस्तै एउटै रूपका बने ।।

आफ्नो रूप न छोडेर जस्तै मान्य हिमाल छ ।
आफ्नै अस्तित्वमा बस्दा तिम्रो व्यक्तित्व बढ्दछ ।।

नेपाली रमणीलाई यो दिव्य चलचित्रको ।
शोभा देखाउने नीति होला कि परमेशको ? ।।

सीता, तारा, सती, गार्गी, गौतमी, पार्वतीहरू ।
जन्मेका देशमा साँच्चै किन चित्र चलुन् अरू ।।

उस्ता उस्ता महादेवी जन्मेको देश हो भनी ।
उस्तै आदर्श खोज्दा हुन् विधाता कलिमा पनि ।।

तर अर्कै चल्यो चल्ती विश्वमा परमेश्वर !
नेपाली पनि मान्छे हुन् कति आदर्श चल्छ र ? ।।

हिमाल हेर्न छोडेर विदेशी फिल्म खोजलान् ।
तिम्रा कीर्तन छोडेर फिल्मका गीत रोजलान् ।।

अथवा जे गरोस् विश्व हेरोस् चिम्लोस् तिमीकन ।
क्यै छैन त्यसको खाँचो रच्दछौ सब खेलन ।।

तर गाम्भीर्यले हेर्दा अर्कै उठ्छ यहाँ गम ।
कहाँ सूर्य कहाँ फिल्म कहाँ पर्दा कहाँ हिम ? ।।

सधैं हिमाल राम्रै छ भन्दछन् सब देखने ।
बिहान जत्तिको राम्रो लाग्दैन दिउँसो भने ।।

उनै सूर्य उही देश उनै दिव्य हिमालय ।
देखिने दिउँसो बेग्लै बेग्लै छ विधिको नय ।।

जस्तो बिहानमा लाग्छ सुनौला हिम पर्वत ।
जुनेली रातमा त्यस्तै रूपौला रूप झिक्दछ ।।

कहिले छ कुनै रङ्ग कहिले छ कुनै अनि ।
यस्तै छ कसरी भन्नू ? शङ्का लाग्ने कुरो पनि ।।

चुच्चे रङ्ग बिरङ्गको उज्यालो अनि शीतल ।
हाम्रो टोपी बन्यो होला देखी यै हिम पर्वत ।।

यस्तै राष्ट्रिय झण्डा यो माछापुच्छ्रे हिमालका ।
दिव्य दर्शनले जन्म्यो दुइचुच्चे बनी अहा ! ।।

कास्कीका उच्च डाँडामा राजधानी गरीकन ।
हेर्थे नरेशका पूर्खा माछापुच्छ्रे प्रतिक्षण ।।

उसैबाट सिकेहोलान् यस्तो झण्डा बनाउन ।
नेपाली हिमको चेलो त्यसै के सक्छ कल्पन ? ।।

माछापुच्छ्रे बनी उच्च माझमा अलमस्त छन् ।
छेउमा अन्न पूर्णा र धवलागिरि बस्तछन् ।।

दायाँ–बायाँ गरी बस्ने यी राम्रा दुइटा गिरि ।
कहिले लाग्दछन् मन्त्री कहिले लाग्दछन् परी ।।

जसै हिमालको हावा दूत झैं बनि आउँछ ।
कोको हुन् यी चिनाएर यसरो भन्न थाल्दछ ।।

"माछापुच्छ्रे त राजा हुन् स्वयं श्रीपेच मण्डित ।
धवलागिरि हुन् मन्त्री राज्यका उच्च मण्डित ।।

पोखरा राजधानी हो अरू डाँडा सिपाहि हुन् ।
राजाका कुकुटी ठूला अन्नपूर्णा हिमाल हुन् ।।

धवलागिरिको शोभा शारदाको प्रसाद हो ।
अन्नपूर्णा जगन्माता लक्ष्मीको प्रियवास हो ।।

धवलागिरिमा बग्ने छहरा छन्द शास्त्र हुन् ।
झिलिझिली गर्ने ज्योति अलङ्कार–प्रकार हुन् ।

यहाँका रसिला दृश्य काव्यका रस भेद हुन् ।
सेता काला दुवै मेघ काव्यका गुण दोष हुन् ।।

अभिधा लक्षणा व्यङ्ग रीत्ति वृत्ति विचारने ।
खण्डकाव्य, महाकाव्य, कोशकाव्य यहीं बने ।।

हिजो आज यहीं फेरि छहरा यो स्वतन्त्र छन् ।
जति ताने पनी मिल्ने गद्य-गीत वनाउँछन् ।।
बिहानै जब देखिन्छन् अन्नपूर्णा हिमालय ।
स्वयं वन्दछ नेपाली अन्नका निम्ति निर्भय ।।
"ती हुन् रे अन्नका राश थुप्रिएका बडा-बडा ।
अनिकाल परेदेखि बाँडिन्छन रे यताउता ।।

त्यो मकैको र कोदाको त्यो चाहिं गहुँ-धानको ।
त्यो जौ र तिलको हो रे ! त्यो चना र बदामको ।।"

भनेर जब उफन्छन् केटा-केटी खुशी भई ।
होला रहस्य झैं लाग्छ कुरा लाग्छन् सबै सही ।।
गोरीका छातिमा सेता कुन्दमाला झुले सरी ।
सेता हिमालमा सेता छहराको छ माधुरी ।।

कहिले-कहिले फेरि हिमपर्वतको छवि ।
छोपेर कुहिरो लाग्छ आत्तिन्छन् मनमा कवि ।।
छाँट-काँट मिलाएर आडम्वर बडो घरी ।
विदेशी दर्शकै तुल्य घुम्छ हुस्स वरीपरी ।।

न लेख्छ कविता राम्रो न हो भावक दर्शक ।
हिममा त्यसरी घुम्न त्यसले किन पर्दछ ? ।।
हुस्स भने गई घुम्ने अतिराम्रा हिमालमा ।
हामी बाठा भने बस्ने यो मैदाने कपालमा ।।

विधाता तिमिमा छैन सृष्टिको सुन्दर-क्रम ।
उल्टो-पाल्टो सकेकैछौ घन्न काम चलाउन ।।
आँखाको कुहिरो फेरि बुद्धिको पनि हुस्स हो ।
के देखेर विचार्दो हो हिममा पुगदा अहो ? ।।

सबै समुद्रमा जान्छन् पानी ल्याउन खातिर ।
हुस्सू हिमालमा जान्छ, हुस्सू हो किन सोच्छ र ? ।।
अग्ला शिखरमा घुम्छन् बुद्धिमान् दर्शकैहरू ।
खोल्सा–खाल्सो कुना–काप्चो खोज्छ हुस्सू अझै अरू ।।

खोल्सामा घुम्मिनालाई किन जानू ? हिमालमा ।
खिच्चू विषयका लागि के गर्नू हरि चिन्तना ? ।।
छोपिई कुहिराद्वारा जब लुक्छ हिमालय ।
शून्य देखिन्छ नेपाल नेपाली मान्दछन् भय ।।

हिमाल न भएको त्यो दिशा उत्तर हो भनी ।
स्वीकार कसरी गर्नु ? पृथिवी पल्टिए पनि ।।
कविको पीर जानेर वीर हावा उदाउँछ ।
उडाई कुहिरालाई हिमबाट धपाउँछ ।।

यति खेर त यो हुस्सु शोभा पाउँछ बेसरी ।
भेडिया गोठका भेडा चर्न बेंसी झरे सरी ।।
हिमालमा चढी शान सूर्यको ज्योतिलाई छ ।
सगर्माथा चढी मान खालि तेन्जिङलाई छ ।।

शोभा दिव्य हिमालको जति-जतो हेऱ्यो उतीं बढ्दछ ।
चोखो कत्ति न छोडने मृदुनशा झन् चित्तमा चढ्दछ ।।
उठ्छन् सुन्दर कल्पना नसकिने यो स्वर्ण छाया मनि ।
भो हेरौं अब छन् अगाडि रसिला पाखा पखेरा पनि ।।

तृतीय सर्ग

# पाखा–पखेरा

जस्तो हिमाल राम्रो छ रुपौला हिमले गरी।
तल त्यस्तै डटेकाछन् हरिया वनले गिरि ।।
सर्वत्र हरियाली छ मनमोहक दृश्य छन् ।
हिमका काखका डाँडा अर्कै वैशिष्टय राख्तछन् ।।
नेपालमा कहीं छैन हरिया वनको कमी ।
विशेष पोखरामा छ शोभा जङ्गलको पनि ।।
राधाका काखमा कृष्ण जति सुन्दर लाग्दछन् ।
हिमका काखमा त्यस्तै यहाँका वन जाग्दछन् ।।
हिमले हरियो राम्रो हिमाल हरियालिले ।
वस्तुतः विश्व चम्कन्छ तेजिला दुइटा मिले ।।
कहिल्यै हरिया डाँडा अनि सेता हिमालय ।
अनि नीलो महाकाश क्या राम्रो विधि–वैभव ।।
हिम–प्रकृति बालाको मुखचन्द्र समान छ ।
सारी झैं तलका डांडा पछ्यौरी सरि श्याम छ ।।
यिनै पाखा—पखेरामा माला तुल्य बनीकन ।
झर्दछन् झरना नित्य हर्दछन् कविको मन ।।
पैह्रे र हरियो चोली उभिने युवती सरी ।
देखिन्छन् हरिया डाँडा झल्किन्छन् जब निर्झरी ।।

चुच्चे पवत ती लाग्छन् बालाका स्तनकै सरी ।
पुष्पहार सरो लाग्छन् खोलसाका सब निर्झरी ।।
सिर्सिरी जब हावाका चल्दछन् बेग सुन्दर ।
हल्लन्छन् छहरी चल्छन् लहरी जलका तल ।।

जब ती लहरी चल्छन् हावाका बेगले गरी ।
बालाका छातिमा खल्ने लाग्छन् तिलहरी सरी ।।

चाँदीका टुकुरा जस्ता शिलामा परदा जल ।
हर्ने मानिसको चिन्ता हुन थाल्दछ कल्कल ।।

फून बाजा बज भन्दा मीठो त्यो लाग्छ कल्कल ।
आत्मानभूतिका निम्ति यो भन्दा अरू के छ र ? ।।

रुनेका साथमा रुन्छ हाँस्नेका साथ हाँस्तछ ।
छहराको मिठो गाना जे सोच्यो अर्थ लाग्दछ ।।

जब यी वनमा घुम्दै गाउँले प्रमदाजन ।
गाउँछन् मधुरा गीत वन लाग्दछ धन्कन ।।

छहरा तवला ठोक्छन् चाल्छन् कोकिल हार्पिन ।
गाउँछन् किन्नरीलाई हाँच्याई प्रमदा-जन ।।

सङ्गीतको सफा ताना पाइन्छ वनभित्रमा ।
साँच्चैको ब्रह्म—आनन्द पाइन्छ मन भित्रमा ।।

ती सेता छहरा संझ्यो-संझ्यो त्यो कललध्वनि ।
सकिन्न कविता गर्न मनमा लाग्छ मोहनी ।।

हरिया फूलका कुञ्ज हरिया तरु-पल्लव ।
हरिया पहरामा छन् फोहरा सरि निर्झर ।।

झर्झरी झरदै झार हल्लाई हलली अलि ।
झरना "झरना" नाम सार्थ पार्छन् ढली ढली ।।

छ हार फूलको माथि छ हार जलको तल ।
छ हरा र भरा दृश्य छहराको छ कल्कल ।।
वनका हरियालीको शोभा धेर बढाउन ।
छर्दछन् छहरा पानी माली तुल्य बनीकन ।।

छहरा जलका बिन्दु वृक्षलाई चढाउँछन् ।
वृक्षले फूलका इन्दु छहरामा बगाउँछन् ।।

देखेर दुइको चाल मनमा प्रेम जाग्दछ ।
गोपी र कृष्णले होली खलेकै होकि ? लाग्दछ ।।

गोपी र कृष्णको दृश्य मिलेको त्यो अहो कति !
श्याम छन् ती लता वृक्ष गोरा छन् छहरा जति ।।

लागेर मधुरो हावा पीं पीं पीं पीं गरी गरी
बज्दछन् बाँसुरी बाँस श्रीवृन्दा वनमा सरी ।।

सधैंका चन्द्रमा जस्ता चम्कन्छन् हिम पर्वत ।
वन भित्र त्रिधाताको रासमा मन चल्दछ ।।

अत्यन्त मधुरो गाना वनकी कोइली पनि ।
मौकैमा गाउँछिन् नौली रासकी गोपिनी बनी ।।

गोपी विरहको गीत चखेवीहरू गाउँछन् ।
महारास रची खेल्न कृष्ण चन्द्र उदाउँछन् ।।

विटपीले लता राम्रा विटपी हरियालीले ।
हरियाली छ चम्केको छहरा र हिमालले ।।

छर्केर मोतिका दाना फर्केर पोखरा तिर ।
सर्केर बेगले गर्छन छहरा मधुर स्वर ।

वनका फूलवारीमा यसरी जल छर्कन ।
कस्सिन्छन् छहरा पो र बाँचेका छन् सबै वन ।।

कालिदास कथाद्वारा भएका पूर्ण वर्णनमा ।२१।
कि शाकुन्तल गाथाका दृश्य हुन् यी महाकवन ? ।।

[१]हृदयीहरूका लागि यहाँकी छवि मोहिनी ।
छैनन् शकुन्तला भन्दा क्यै कुरामा पनी कमी ।।

अडचाई मनका घोडा छोडी संसारको रथ ।
हेर्दछन् कवि दुष्यन्त यहाँको रूप निश्छल ।।

छहराको घडा बोकी यहाँकी प्रकृति प्रिया ।
तानी शकुन्तला बन्दै पानी छर्छिन यता उता ।।

यहाँ प्रियम्बदा हाँस्छिन शगीका मधुगानमा ।
अनसूया छसर्वत्र शान्तिका प्रिय तानमा ।।

सभिन्छन् बाबियो चल्दा सब कुटिलकुन्तला ।
शकुन्तलाई देखेमा सभिइन्छिन शकुन्तला ।।

पुष्प शकुन्तला माथि भमरा जाइलाग्दछन् ।
शाखा हल्लाउँदै वृक्ष त्यो हटाउन खोज्दछन ।।

त्यो देखी कवि– दुष्यन्त ईर्ष्यालू भाव भिक्तछन् ।
बजारिया कुमारीको नखरा पुष्प सिक्तछन् ।।

बिर्सी संसारको राज्य कवि मोहित बन्दछ ।
लुकाई महिमा आफ्नो 'डुलाहा हुँ म' भन्दछ ।।

संसारी भावना रूपी मत्ताहात्ती उसै घरी ।
आउँछन् कवि·दुष्यन्त चल्दछन् करमा परी ।।

हरियो फरिया पैन्ही वनलक्ष्मी शकुन्तला ।
कुञ्जका पुष्पशय्यामा बन्दछिन् काम·विह्वला ।।

१यस पछिका २२पद्यमा महाकवि कालिदासका शाकुन्तल नाटकको कथाध्वनि छ ।

जघनस्थल भैं गोरा कदलीस्तम्भका मनि ।
एकान्त कान्त भैं मुग्ध बन्दछन् हृदयी पनि ।।

लज्जा, माधुर्य, आनन्द, प्रेम आंखा भरी भरी ।
दुवैले दुइटैलाई हेर्दछन् एउटै भई ।।

अनि के हुन्छ के हुन्छ ? अर्कै हुन्छ जगत्सब ।
विश्व-विस्मृतिको शुद्ध ब्रह्मानन्द उदाउँछ ।।

तर हा ! दैवले गर्दा क्यै दिनैमा रुँदै रुँदै ।
दुवैले छुट्टिनू पर्छ मनले नअघाउँदै ।

छोडर वनकी लक्ष्मी शहरी बागमा गई ।
दुष्यन्तले सरी भुल्छन् प्रेम-उन्को हरे ! कवि ।।

आउन्नन् कवि-दुष्यन्त आत्तिन्छिन् प्रकृति-प्रिया ।
बनेर छहरा लिन्छिन् आंसु भार्दै अनो बिदा ।।

बिदा शकुन्तलालाई दिन आँटे सगै गरी ।
अर्पन्छन् वनका वृक्ष पुष्प-भूषण बर्बरी ।।

पिता पर्वतको काख छोडेर सललो बही ।
छहरा घरमा जान्छन् हिन्दू-बाला सरी भई ।।

पिताको काख छोडेर हिंडेका पतिका घर ।
छहरा भन्दछन् मान् छोरी हो लौ यसै गर ।।

छोरी भैं कल्कलाएर बढेका छहराकन ।
विदा गरी अहो बस्छन् ! धन्य पाषाणको मन ।।

'नजाऊ बहिनी !' भन्दै बाटमा गाँस रोवतछन् ।
पनेलो पातलो सारी मृग आई समाउँछन् ।

त्यसैमा जन्मिए वृक्ष त्यसैमा छहरा तर ।
के गर्नू विधिको लेखा ? छहरा यी गए पर ।।

फर्कन्न वन छोडेर कहिल्यै दुःखिया मन।
दैवले दुःखिकै निम्ति रचेछन् हरियो वन ।।

यी राम्रा वन-पाखमा जे हेऱ्यो ज्ञान आउँछ।
वृक्षै पिच्छे लतै पिच्छे नीति शास्त्र उदाउंछ ।।

न बोल्ने वनको छायाँ हामीलाई सिकाउँछ।
सुन्ने मान्छे जहाँ छैनन् चूपलागन बेस छ ।।

हावा लागेर हल्लेका हाँगाले हृदयीकन।
डाकेका हुन् कि झैं गर्छन् कुराकानी मिलाउन ।।

"आऊ प्रकृतिका चेला !" सिक विद्या थरी थरी।
नठान मनमा कत्ति हामी छौं अरूका अगि ।।

देखेर पुतली राम्रा सिक्यौ रङ्ग मिसाउन।
नाचेका लहरा देखी जान्यो नाच्न नचाउन ।।

देखेर माकुरा जान्यौ बुन्न रेशमका लुगा।
मैना र कोइलीबाट पायो संगीतको सुधा ।।

चोलो सारी, पछ्यौरामा फूल हेरी बुटा भऱ्यौ।
देख्यौ प्रकृतिक दृश्य रसिला कविता गऱ्यौ ।।

चराको नै इशाराले बन्यौ मानव खचर।
प्रेरणा मृगको पाई बनायौ रथ-मोटर ।।

अझ पनि सिके सिक्ने विद्या प्रकृति भित्रछन्।
जे हेर अडिई हेर सृष्टि सान्है विचित्र छन् ।।

वनका कुञ्जमा घुम्दा यस्तो आवाज गुँज्दछ।
तर यो कानले व्हैन मनले मात्र सुन्दछ।।

हात्ती झैं भूमि ढाकेर बसेका शान्त पर्वत।
चपचाप बुझीराख्छन् मान्छे जे जति गर्दछ ।।

कसैले पहरा फोरे सुन—चाँदी लिई गए ।
कसैले हातका ठेला छामी सास लिई गए ।।
योटाले कविता लेख्यो अर्कालाई सुनाउन ।
अर्काले कविता लेख्यो आफैंलाई भुलाउन ।।

दुइटा विरही आई यहीं हाँसेर भेटिए ।
दुइटा विरही आई यहीं रोएर मेटिए ।।

मृग मार्न कुनै आए क्वै आए फूल टीपन ।
हाँस्न आए कुनै याहीं क्वै आए आँसु पूछन ।।

क्वै गए दाउरा काटी घाँस काटेर क्वै गए ।
क्वै गए दिन काटेर हात काटेर क्वै गए ।।

रोकेनन् वन—पाखाले जो सुकै जे सुकै गरुन् ।
कोही हाँसुन् कि रोऊन कि कोही काटुन् कि काटियुन ।।

गोपी कृष्ण पुकारेर गोपी कृष्ण सरी बनी ।
घुमेका छन् सबै तर्फ शुक, मैनाहरू पनी ।।

हरिया वनका भित्र हरिया ती चराचरी ।
देखदा भित्र वर्षन्छन् भावका आंसु बर्बरी ।।

त्यसैमा हरियो सारी पैन्हेका युवतीहरू ।
गाउँछन् जब रोएर मन भन्छ कसो गरूँ ।।

वनमा नेत्रका निम्ति हरियाली तमाम छ ।
यी लोभी कानका निम्ति चराको प्रियगान छ ।।

वन भित्र जसै पस्छौ वसन्त ऋतुमा तिमी ।
"को हो के हो ?" भनी सोध्लान् त्यहाँका कोइली पनि ।।

घेरै चराचरी बोल्छन् हाम्रो बोली सरासर ।
पढायो कसले ? कैल्हे ? यसको छैन उत्तर ।।

कोही दिदैंन क्यै किन्तु चरो छोड्दैंन गाउन ।
"कर्मण्येवाधिकारस्ते मा फलेषु कदाचन" ।।

कर्मले वनमा जन्म पाएका भै पनी चरा ।
सुनुन् कि नसुनुन कोही जानेको गाउँछन् बरा ।।

वनमा गीत गाएर रुने विरहिणी सँग ।
चराले करुणा गाना कति राम्रो मिलाउँछ ? ।।

"माइतीलाई सम्झ्यौ कि प्यारा टाढा भए कित ?
कसैले मनमा तिम्रा चोट पारिदिए कित ? ।।

गाउँलेका कुराद्वारा प्यारा खिन्न भए कित ?
सासू र ससुराबाट क्यै रिसानी भयो कित ?।।

जाँदा माइतमा केही भाउजूले भनिन् कित ?
चाड वाडमहाँ बिर्से माइतीहरूले कित ? ।।

तिमीबाट भयो आज ठूलो भूल कर्तं कित ?
नराम्रो सपना देख्यौ रातमा तिमीले कित ? ।।

अर्को विवाहको चर्चा कर्त उन्को चल्यो कित !
के परचो मनमा चिन्ता दिदी आउ बताउत ?।।

भन्लान् जस्तो गरी आई ती चरा गीत गाउँछन् ।
के बोलुन् विचरा नारी खालि आँसु बगाउँछन् ।।

लहरा हरियालीले पहिल्यै अलमस्त छन् ।
उसैमा फक्रँदा फूल असाध्यै मन हर्दछन् ! ।।

हो यो पुष्पवती भन्ने न सोची भमरा सब ।
लताका पासमा जान्छन् कामीले पनि सोच्छ र ? ।।

हुन्छन् पुष्पवती पैल्हे डाक्तछन् भमरा अनि ।
फल जन्माउँछन् फेरि लताको क्या छ जीवनी" ।।

कलिकामा छ के बेर हुनु पुष्पवती पन ? ।
कलिकामा छके बेर हुनु पुष्पवती पन ?॥

घरी पक्क घरी छक्क घरी टक्क यसै गरी ।
घुम्दछन् वनमा सोभा चित्रकार तथा कवि ॥

झपक्कै फल फुलनाले घपक्कै वन बल्दछ ।
टपक्कै मृग छोपेर काखमा लिउँ लाग्दछ ॥

क्वै पीताम्बर छन् फूल, अनि क्वै नीलकण्ठ छन् ।
क्वै चतुर्मुख छन् आफैं सृष्टि आदि चलाउँछन् ॥

हावाले गर्छ सिर्सिर्सि पानीले गर्छ कलकल ।
बैग्लै छ दुइको भाषा चल्छ तै पनि छलफल ॥

गाएर वनका घाँसी हाँसी पुण्य कमाउँछन् ।
भानुभक्त सरी घेरै जनता होश पाउँछन् ॥

कतै फूल कतै मूल कतै कुञ्ज थरी थरी ।
अलपत्र परेकाछन् कविका मालकै सरी ॥

सेता कुसुमको फेटा शिरमाथि गुथी वरी ।
वृक्ष क्या छन् नि गम्केका भर्खर्का दुलही सरी ॥
फूलका गहना पैन्ही पछ्यौरीं पालुवा गरी ।
क्वै लता क्या नुहेकाछन् भर्खर्की दुलहीं सरी ॥
नबोली लाजमानेर उभिएका यिनी दुवै ।
लावा होमन लागेका जस्ता लाग्छन् सँगै सँगै ॥
सँगै हाँस्छन् सँगै रुन्छन् सँगै सुत्छन् र उठ्तछन् ।
नर- दम्पतिका लेखा वृक्ष दम्पति उच्चछन् ॥

क्वै बूटा टाँस्सिएका छन् जेलिँदा लहरा अति ।
घेरै बिहा गरेकाले भोग्नुपर्छ यही गति ॥

कस्तै हावा चलोस् किन्तु न न्हो स्थिरता घरी।
कुनै वृक्ष डटेका छन् गोर्खाली वीरकै सरी॥
राजा प्रजा सबैको छ प्यारो यो - वन - माधुरी।
पञ्चायती प्रजातन्त्र सबै रोज्छन् बराबरी॥

हाँगा पात, जरा राम्रा राम्रै पुष्प हुँदा पनि।
बाँझी नारी सरी कोही हुँदैनन् फलका धनी॥

यहाँका वनका राजा परिवार - नियोजन।
गर्दछन् देशको कार्य सुविधाले चलाउन.।

माकुराका पनि जाल यहाँ कानून तुल्यछन्।
अल्झिदैनन् जहाँ ठूला साना बल्भेर मर्दछन्॥

लाखौं युवती आएर आलिङ्गन गरे पनि।
झुक्तैनन् वनका वृक्ष साँच्चैकाछन् तपोधनी॥

अथवा जङ्गलीलाई थाहा के रसको छ र ?
पाएर सुन्दरीलाई गर्न जानुन समादर ! ॥

सुगन्धी छ कहीं धेरै कहीं छैन रती भर।
धनी गरीबको संख्या कुन ठाउँ कमी छर ? ॥

रुस झैं वायु चाहन्छ साम्यवाद सरासर।
अमेरिका सरी लिन्छ पूँजिवाद धरातल॥

सुनिन्छन् द्विजका वाणी छर्किन्छन जल –औषध।
अनौठा फल पाइन्छन् वन यज्ञ समान छ॥

कुहू कुहू भनी क्वैली चन्द्रमाकन डाक्तछ।
कुहु हो औंशिको नाम भन्ने जान्दैन भुल्दछ।

बुझिन्छ यसले विद्वान् छैन यो कोइली त र।
विश्वमा गाउने मान्छे प्रायः विद्वान् को छ र ?॥

पोतेर हिमले कोठीं बत्ती बालेर जूनको ।
झल्कने गहना पं=ही सुन्तला रूपि सुनको ।।
गाएर कोइलीद्वारा फलमाला लिई कन ।
डाक्तछिन वनकी रानी गर्न एकान्त चुम्बन ।।
अंधेरी रात लागे कि वनको बत्ति निभ्दछ ।
शान्त एकान्तमा खालि मीठो निःश्वास चल्दछ ।।
ताराका दिव्य सीतारा जडेको व्योम च्यादर ।
ओढाई काखमा लिन्छिन् वनबाला चराचर ।।
हिमाली यी राम्रा गहनवनमा अ ई घुमियो ।
नफक्रका जस्ता कवि-हृदयका फूल सुंघियो ।
अगाडी झन राम्री विमल जलकी नित्य सुकिली ।
बगेकी छन् शुक्ला सहृदय ! गर्रौं आचमन कि ?

चतुर्थ सर्ग

# शुक्ला गण्डकी

बीचमा बेगले बग्दै मोतिको मालिका सरी ।
झुलेकीछन् अहा ! शुक्ला झल्काई पूर्ण माधुरी ।।
देखेर यिनको शोभा अडिएर क्षणै भर ।
न पग्लने त को होला ? भई वास्तवको नर ।।
नाम हो यिनको सेती सेतै छ यिनको जल ।
नेपाली जनता राख्छन् कामले नाम गौरव ।।
दूधकी विश्वमा योटो नदीको सिर्जना गरी ।
पाए आशिक ब्रह्माले बाँचिराख्ने जुगौं भरी ।।
जे जे अचम्मको काम गर्ने लहड लाग्दछ ।
यहीं गर्छौ जगत्स्रष्टा ! तिमीमा धन्यवाद छ ।।
हरिया वनले सेतो टल्केका हिमले गरी ।
आफैं नै भैगएको थ्यो पोखरा सुनको चरी ।।
उसमा दूधकी गङ्गा किन पर्थ्यो बनाउन ?
विचित्र लहडी रैछौ ब्रह्माजी तिमी मन्मन ! ।।
सधैं सेतै बगेकी छन् सँङ लिइन्नन् कुनै दिन ।
पुगेकै छ सधैं सेतो सकिन्थ्यो विधिको किन ?।।
सङलाको महिमा गर्छन् विश्व भित्र सबै जन ।
सेतो लिई पनि हर्छिन् यी शुक्ला सबको मन ।।

हिन्दुस्थानमहाँ भूप अहिन्दू बनलान् भनी ।
आई नेपालमा बग्ने हुन् कि भागिरथी यिनी ।।
अथवा विष्णु अंशीको राज्य हो यो हिम–क्षिति ।
ठानी अंश लिई आए आफैं क्षीर समुद्र जी ।।

कि ब्रह्माजी सधैं पोत्छन् कमेराले हिमालय ।
पोत्दा पोखिन्छ क्यै पानी सोही बग्छ यहाँ तल ।।

कि हिमाल भयो सेतो गौरी भन्दा भनी शिव ।
पखाल्छन् दिनहूँ सेतो सोही बग्छ यहाँ तल ।।

गौरीशङ्करको स्नान गराई कामधेनुले ।
बगाइन् कि पयोधारा हाम्रा पोषणहेतुले ।।

गणेशले पगालेर छोडेको पार्वतीपयः ।
बग्यो कि अथवा पानी मिस्सिएर तलै–तल ।।

अथवा पार्वती–आमा हामी पुत्रहरूकन ।
बगाई दूधका धारा गर्दछिन् नित्य पालन ।।

कि आमा भूमिको छाती हो यो नेपाल सुन्दर ।
छाती माथि उठेका यी दुद हुन् हिमपर्वत ।।

'हाँ हाँ' गर्ने सधैं भोका छोरा छोरी मनुष्य हुन् ।
सेती हुन् दूधकी धारा सधैं पग्लेर बग्दछिन् ।।

इत्यादि कल्पना उठ्छन् देख्दा यी गण्डकीकन ।
साह्रै रमाइलो मान्छ शुक्लाका तटमा मन ।।

यी शुक्ला जति शुक्ला छिन् त्यति होलिन् भनीकन ।
पढी यी कविता मात्रै पत्याउन्नन् कुनै जन ।।

नीली छन् जमुना भन्दा श्रीकृष्ण गण्डकी भनी ।
सेती भागिरथी भन्दा बन्ने को हुन् अहा ! यिनी ।।

दहमा पनि छन् सेतै सेतै छन् भेलमा पनि ।
पक्षपात कहाँ गर्थिन् ठूलाकी छोरी हुन् यिनी ।।
यिनैका छविले होला स्वर्गका अप्सरा पनि ।
लाज मानी हराएछन् देखिदैनन् यहाँ कहीं ।।

उठ्दो होला निकै रीस इन्द्रका मनमा पनि ।
स्वर्गरानी 'शची' भन्दा शुक्ला गोरी भइन् भनी ।।
यसैले हो कि सालिन्दा धमिल्याउँ भनीकन ।
जल वर्षाउँदै इन्द्र भल हुल्छन् टनाटन ।।

जानेर इन्द्रको भाव शुक्ला साऱ्है रिसाउँछिन् ।
काली र धमिली बन्दै इन्द्रलाई गिज्याउँछिन् ।।

गर्जन्छन् इन्द्रका मेघ गर्जन्छिन् भूमिमा यिनी ।
चम्किन्छन् विजुली माथि लम्किन्छिन् बेगले यिनी ।।

वर्षामा इन्द्रका साथ मानू युद्ध चले सरी ।
गड्किन्छ ध्वनि गङ्गाको चड्कँदा बेगले गरी ।।

पाई यो जलको वर्षा उर्वरा हर्ष मान्दछिन् ।
लिएर इन्द्रको पक्ष ठूलो स्वागत गर्दछिन् ।।

भूमिको चाल देखेर शुक्ला चुरमुराउँछिन् ।
भत्काई दुइटै पाखा पानी द्वारा बगाउँछिन् ।।

गड्याङ आकाशमा हुन्छ गुडुङ हुन्छ नदी महाँ ।
गड्याङ गुडुङ दुबै हुन्छन् मान्छेका मनमा यहाँ ।।

शुक्लाको तीरमा हिंड्दा वर्षामा मन गल्दछ ।
अनेकौं पहिरा खस्छन् ठूलो भूकम्प चल्दछ ।।

फोर्दछिन् पहरा ठेकी कमेरो दहि पोख्तछिन् ।
कृष्णावतारको लीला शुक्ला भै पनि गर्दछिन् ।।

आहि ! आहि ! परी हाल्छ शुक्लाका वृद्धिले गरी।
विज्ञान–वृद्धिले गर्दा हिजो आज भए सरी ।।
भन्दिनन् वृक्ष यो ठूलो यो ठूलो पहरो पनि ।
भत्काई चल्दछिन् सारा रणचण्डी सरी बनी ।।

थाकेर मेघ गर्जन्नन् जल वर्षन छोड्दछ ।
शुक्लाका वेगमा किन्तु यस्तै चड्कन चल्दछ ।।
कुहिरो तल ओर्लेर लत्री पाउ समाउँछ ।
"हे गङ्गे ! यो क्षमा पाऊँ भन्दै विन्ति बिसाउँछ ।।

सुन्दिनन् उसको विन्ति अत्यन्त क्रोधले गरी ।
देवताले पुकारेका नृसिंह भगवान् सरी ।।

'पिता हिमाल हो छोरी लक्ष्मी हुन् पति सागर ।
ज्वाइँ विष्णु' भनी होला शुक्लाको यति जाँगर ।।

अथवा माइती जस्को नेपाली वीर जाति छ ।
कुहिराहरूको त्यस्ले कहिले डर मान्दछ ।।

भक्त प्रल्हाद झैं जल्है शरद्को ऋतु आउँछ ।
लोकले तब गङ्गाको शान्त आवाज पाउँछ ।।

यस्ता वर्षा कती आए सेतै नै छन् अहा ! यिनी ।
जती खाऱ्यो उती राम्रा बन्दछन् गुणका धनी ।।

शरद्का चाँदनीलाई दबाएर प्रभा छरी ।
बन्छिन् शरदमा शुक्ला कोटिचन्द्र कला सरी ।।

उता त्यो शारदी ज्योत्स्ना त्यता ती नव-पङ्कज ।
यता यी धवला गङ्गा शरद्का रम्य बन्दछ ।।

बर्षा गए पछि गङ्गा गर्दिनन् उति खल्बल ।
तताए पनि आगाले चीसै बन्छ पछी जल ।।

तर नित्य चलेकै छ मीठो गर्जन तर्जन ।
शुक्ला हुन् गण्डकी श्रेष्ठा अरू जस्तै रहुन् किन ?।।

हर्दछिन पापका सातो गर्जिएर निरन्तर ।
नेपाली जनतालाई पापले छुन सक्छ र ? ।।

अथवा वीर-भूमि हो देश यो विश्वमा भनी ।
कड्किएर हिंडेकी छन् वीरमाता स्वयं बनी ।।

कि आफ्नो महिमा भन्न निस्केनन् पण्डितं भनी ।
आफै फलाक्दछिन् कीर्ति नौली पण्डितिनी बनी ।

या त काली दिदीलाई भेट्टाउन भनीकन ।
कराई दौडदै भन्छिन् "ए दिदी ! अब पर्खन ?" ।।

अथवा जल बेगैमा नाची ताली दिईकन ।
कलि लाग्यो भनी शुक्ला गर्दछिन् हरि कीर्तन ।।

अथवा विश्वमा जागे सारा उन्नतिमा बढे ।
नेपाली हो उठो जागो ! भन्दछिन् उच्च शब्दले ।।

प्राचीन ऋषिको सम्झी मन्त्रको ध्वनि पावन ।
यद्वा लहडमा गर्छिन् उसैको पनि गन्थन ।।

जे जे होस् गहिरो तत्व शुक्लाका शब्दभित्र छ ।
तटमा बसने व्यक्ति शान्ति एश्वर्य पाउँछ ।।

धन्य छन् पोखरावासी शुक्लाका, तटले गरी ।
मर्नाको हुन्न है चिन्ता पोखरामा कुनै घरी ।।

मरेमा पनि गङ्गामा बग्न पाइन्छ सल्सली ।
बाँचेमा पनि गङ्गाको पानी पिइन्छ कल्कली ।।

सङ्ला नीला नदी-नाला शुक्ला भित्र पसीपसी ।
शुक्लाको शुक्लता हर्न बल गर्छन् सधैं अति ।।

तर यी गण्डकीजीको रङ्ग बिग्रन्न कथै गरी ।
आफ्नै सिद्धान्तमा मस्त नेताको भावना सरी ।।

अथवा यी नदी मिल्छन् शुक्लामा प्रेमले गरी ।
आनन्द–ब्रह्ममा मिल्ने विशुद्ध ज्ञानवान् सरी ।।

शुक्लामा न पुगे सम्म अरूको पनि नाम छ ।
ज्ञानमा न पुगेसम्म कर्मको पनि काम छ ।।

मेटिन्छन् जसरी कर्म शुद्ध ज्ञानी भए पछि ।
मेटिन्छन् त्यसरी खोला शुक्ला भित्र गएपछि ।।

कुने कान्चे नदी नाला शुक्लामा पस्दछन जब ।
पवित्र तीर्थको मान पाउँछन् तिनले तब ।।

अगि सम्म थिए सोता पोल्न काम नलागने ।
तिनै तीर्थ बने हेर सङ्गले छैन के हुने ? ।।

शुक्लाका जलको स्पर्श हर्ष वर्षा गराउँछ ।
अङ्गमा पापको स्पर्श वर्ष वर्ष हराउँछ ।।

शुक्लाको सात्विकी दृश्य पापलाई धपाउँछ ।
आत्मा यो तत्व पाएझैं त्यसैमा टकलाउँछ ।।

पाई सुगन्ध शुक्लाको मुख पाइन्छ बसरी ।
तुलसीदल संयुक्त पञ्चामृत सुँघे सरी ।।

चिसा शिशिर हेमन्त जसै आइ रमाउँछन् ।
तुषारासँग शुक्लाका उपमा मिल्न पाउँछन् ।।

वसन्तमा अहा ! शुक्ला सन्तझैं शान्त बन्दछिन् ।
अनन्त भक्तले अन्त जानपर्दैन भन्दछिन् ।।

पानी सेतो सरी हुन्छ गर्मीमा हिमले गरी ।
ठेकीबाट ढिलो खस्ने जाडाका मोहिकै सरी ।।

तीरमा कास फुल्दा त वारी पारी दुवै तिर ।
सीमा पाउन पानीको परिहाल्दछ मुश्किल ।।
काँसै सेतो जलै सेतो सेतै ढुङ्गा पनी हुँदा ।
गएरै छामनू पर्छ गङ्गा पत्ता लगाउँदा ।।
यत्ति होइन शुक्लाको दृश्य विस्मयकारक ।
वगाईमा पनी ज्यादै यिनको छाँट काँट छ ।।
वारको पार देखिन्नन् कहीं चाक्ली हुँदा अति ।
एक बित्ता पनी छैनन् साँगुरी भै कहीं अति ।।
कहीं ता भास्सिएकी छन् कहीं ता माथि माथि छन् ।
कहीं पुरै लुकेकी छन् शुक्ला यस्तो विचित्र छन् ।।
हिजो आज अझै शुक्ला धँसेकी छन् तलै तल ।
पुराना भावका व्यक्ति सहन्नन् कलिको बल ।।
प्रवाह देखिनू छैन खालि गर्जन मात्र छ ।
लुकेकी छन् जहाँ गङ्गा साह्रै आश्चर्य मान्नु छ ।।
कलि लाग्यो वढ्यो पाप देखिसक्नु भएननि ।
भनी होला कि यी शुक्ला लुकेकी पृथिवी मनि ।।
कौशेय शाटिका पैन्ही गुप्तवास बसीकन ।
तपस्या हरिको गर्ने झिकेकी हुन् कि लक्षण ? ।।
यी यस्ता कल्पना हामी गर्ने औसर पाउँछौं ।
शुक्लाको भेद अर्कै छ जानी जानी लुकाउँछौं ।।
तीजमा गण्डकीमा र नेपाली रमणीमहाँ ।
असाद्धे तुल्यता पर्छ दाँजेरै हेर्दा यहाँ ।।
पवित्र घाटमा घुम्दै गाउँदै उफ्रँदै अनि ।
नचरी लाउँदै हिंड्छन् तीजका रमणी पनि ।।

कवरी जलकै बाटो धोएर जलले मुख ।
पैन्हिई जलकै सारी शुक्लाको गति चल्दछ ।।

गोरा राम्रा ठूला साना यता छन् जलका छिटा ।
गोरा राम्रा ठूला साना उता छन् प्रमदा छिटा ।।
शुक्लामा एउटा शक्ति दिएछन परमेशले ।
शुक्ला तरन आँटचो कि तऱ्यो संसार तेसले ।।

भुमरी चल्दछन् लाखौ करोडौं भेल बग्दछन ।
भसक्कै उठ्छन् भल्का धेरै बिन्दु फराल्दछन् ।।
प्रवाह जलको धेरै रूपको पनि राश यो ।
गम्केको गर्जना त्यस्तो शुक्ला गङ्गा अपार हो ।।

अपार जल पाएर यति सौन्दर्य पाउनु ।
शुक्ला अर्को कहीं छैन उपमा कसको दिनु ।।
सानो छ एउटा दोष शुक्लाका तटमा कहीं ।
शोभा कमलको छैन सफा छन् यी जहाँतहीं ।।

करोडौं पद्मको शोभा हर्दछिन् एक बिन्दुले ।
शुक्लाका तटमा व्यर्थै पद्म पो किन चाहिए ? ।।
कविका काव्यमा मात्रै राम्रो हो पद्मको वन ।
झयाउले काउली पर्छ राम्रो लाग्दैन हेरन ।।

यस्ता निर्मल गङ्गामा बनाई पद्मसंहति ।
कोरा आदर्शका नेता किन बन्थ्ये स्वयं विधि ? ।।
सोझी छन् तर छन् ज्यादै बलिई गंडकी यिनी ।
सोझा भै बलिया हुन्छन् नेपाली जनता पनि ।।

जोशिलो दरिलो लाग्छ शुक्लाका भेलको छवि ।
राणा विरुद्ध उर्फेका जनको जुलुसै सरी ।।

मनुष्य-जलले पूर्ण जनता नाम सागर ।
यदि उर्लन्छ आँटेर कसको खूबि चल्छ र ?"

'ठूला सम्मान पाएकी हुन् काली गंडकी दिदी ।
दिदी भन्दा म गोरी छु दिदी भन्दा म छु छिटो' ।।
दिदी छन् गहिरी किन्तु सबैले पार पाउँछन् ।
म उत्ती गहिरी छैन तर सप्पं डराउँछन् ।।

भनेको होकि झैं लाग्छ शुक्लाका मृदुगानले ।
तर यो तथ्य हो हुँन ? भनेको अनुमानले ।।

एकाकी पनको गाना सेती गंगा सुसाउँछ ।
त्यो गानाको मीठो अर्थ बसुवाले बताउँछ ।।

पुण्डरीक कहीं छैनन् कैलाशादि समीप छन् ।
श्री शुक्ला यसले गर्दा महाश्वेता समान छन् ।।

हावाको सिर्सिरी शब्द मानू भन्छ सधैं यही ।
"पुण्डरीक न पाएर रुनू पर्दैन गण्डकी" ! ।।

आफ्नो मार्ग न छोडेर जुगौंदेखि यसै गरी ।
बगेकी छन् अहा ! शुक्ला नेपाली नीतिकै सरी ।।

शुक्लाको महिमा लेखी सिंगै काव्य बनाउन ।
पाएमा पनि शोभाको पुरा बन्दैन वर्णन ।।

चाहिन्नन् पोखरालाई अरुदृश्य कुनै पनि ।
त्यसै अद्भुत हुन्थ्यो यो शुक्ला मात्र भए पनि ।।

शुक्लाका तटका सेता शिलामाथि चढीकन ।
उभिएमा फिका लाग्छ शुक्लाको सब वर्णन ।।

यी शुक्ला स्वर्ग गङ्गा हुन् वन नन्दन-बाग हो।
सुमेरु हो सगरमाथा नेपाल स्वर्ग भूमि हो ॥

ढल्की ढल्की विमल तट तीं बिन्दुले छाँकिएकी।
टल्की टल्की हिमगिरिमहाँ दौडँदै ओलिएकी ॥
गड्की गड्की रिपुमदहरी बेगले तडकिएकी।
हेर्‍यौं सेती ! अब त नगिचै ताल छेऊ पुगौंकि ? ॥

## पञ्चम सर्ग

# ताल

अझै राम्रो अझै शान्त अझै नै मनमोहन ।
'फेवा' नाम लिई ख्यात यहाँ ताल छ शोभन ।।

बगी ती गण्डकी शुक्ला सिंगार्छिन् एक तर्फत ।
टिलिग्लो तालिई ताल एकातर्फ सिंगार्दछ ।।

श्री शुक्ला गण्डकी भन्दा पनि राम्रो र अद्भुत ।
छ भने विश्वमा केही यही वाराह ताल छ ।।

न लिई हिमको सेतो न दौडी गण्डकी सरी ।
देखाई पृथगस्तित्व ताल गम्कन्छ बेसरी ।।

जस्तो भए पनि मिल्छ देख्न अन्त हिमालय ।
यो राम्रा तालका निम्ति पोखरै पुग्नु पर्दछ ।।

नेपाल विश्वमा राम्रो उसमा पोखरा अति ।
उसमा पनि यो ताल राम्रो भन्छन् कुनै कवि ।।

म भने जे जता देख्छु उतै नै मोह पर्दछू ।
त्यो भन्दा छैन क्यै ठूलो भन्ने विश्वास गर्दछू ।।

शुक्ला हिमाल औ ताल भिन्न छन् रूपले गरी ।
सुख दिन्छन् सबै एक ब्रम्हा, विष्णु, शिवै सरी ।।

शिशुका मनझैं सङ्लो गहिरो कवि–भाव झैं ।
स्वच्छ स्फटिक झैं राम्रो चारै तर्फ छ एक नै ।।

रहस्यपूर्ण देखिन्छ ताल गाम्भीर्यले गरी ।
प्रच्छन्न रूपमा बस्ने हाम्रा नेपालकै सरी ।।

गम्भीरत्व अनुष्णत्व मधुरत्व सबै गुण ।
अध्यात्म–वादमा झैं छन् ताल भित्र गमागम ।।

वेदमा लहरी छुट्छन् जस्तै अध्यात्म वादका ।
तालमा लहरी छुट्छन त्यस्तै नेपाल–वादका ।।

प्यारी नेपाल आमाका करुणामृतले सरी ।
नेपाली छहराद्वारा यो भरिन्छ नि बेसरी ।।

एकातर्फ छ मैदान एकातर्फ पहाड छ ।
दुवैको प्राकृती दृश्यताललाई सुहाउँछ ।।

राम्रा उन्नत ती डाँडा तालका दुई तर्फका ।
चीन भारत झैं लाग्छन् मित्र राष्ट्र अनादिका ।।

बीचमा ताल यो लाग्छ हाम्रै राष्ट्र बरोबर ।
पूर्व तर्फ झुकी केही फुकेको पश्चिमै तिर ।।

नाप बन्दी गरे पछि काठमाडौं जहाँ निर ।
उहीं नेर बनेको छ नृपको रत्न मन्दिर ।।

श्री रत्न राज्य लक्ष्मी झैं कृश गम्भीर सुन्दर ।
ताल छेउ बनेको छ हाले यो रत्न मन्दिर ।।

यो मन्दिर बनेको हो तालको छवि चाखन ।
केही चाहिन्न यो राम्रा ताललाई सिंगारन ।।

तालको चाल देखेर विदेशी माग्दछन् वर ।
तालका छेउमा देऊ जन्म हे परमेश्वर ! ।।

राष्ट्र गीत पुकारे झैं तालका दुइतर्फका ।
छहरा प्रेमले गर्छन् मधुर–ध्वनि सर्वदा ।।

राष्ट्रिय प्रार्थना गर्दा उठेका जनता सरी ।
भई शान्त उठेका छन् ताल छेउ वनस्पती ।।

नेपाली जनतामा छ जस्तो सुन्दर एकता ।
तालका विन्दू बिन्दुमा उस्तै नै छ अभंग्यता ।।

चन्द्र औ सूर्यका छायाँ तालको माझमा परी ।
देखिन्छ ताल नेपाली राष्ट्रिय ध्वजकै सरो ।।

झण्डा फरफराए झैं फिर्किरी फिफिरी गरी ।
तरङ्ग जलका चल्छन् वायुका वेगले गरी ।।

किनारा गहिरा नीला देखिन्छन् दूरबाट र ।
झण्डाको उपमा खोजन पर्दैन दौडनू पर ।।

घरी घरी उठी छाल "जय नेपाल" भन्दछन् ।
तालका माझमा विष्णु राष्ट्रनायक बन्दछन् ।।

लिएर बहना यौटा यहाँ हिंडछन् कुनै जन ।
तालपारी कुनै हिंड्छन् यस्तै हो जन जीवन ।

लिएर हातमै पाटी नौ साथी सँग ली कन ।
पञ्चायत-विधाता झैं हिंडेका छन् कुनै जन ।।

नौ-का-देश तबै लाग्छन् भ्रान्तिई ढलपलाउन ।
भिन्नै सिद्धान्तका पाटै जब लाग्छन् खियाउन ।।

यसैले बढिया यौटै कर्णधार बनाउनू ।
साना नौकाहरूलाई उसैबाट खियाउनू ।।

पा ताल कि न पा ताल सारा संसारमा डुली ।
पातालमै तँ जा किन्तु न पा ताल यहाँ सरी ।।

हिमालका सिढी बाट ओल दै मस्त भैकन ।
आइहुन् पार्वती देवी यहीं नित्य नुहाउन ।।

हिमले ठिहिऱ्याएका कलिला चरण कन ।
लागिहुन् हिमबालाले यहीं आई पखालन ।।
हिमाल तिर फर्केर फर्कंदा तालका तिर ।
पार्वतीको पँधेरो हो भन्न के बेर लाग्छ र ? ।।

भन्छन् नेपालमा छैन एउटै पनि सागर ।
तर सागरको शोभा ताल तुल्य कहाँ छ र ? ।।

होलान् सागरमा रत्न छ यहाँ रत्न मन्दिर ।
होलान् टापू उहाँ फोक्सा यहाँ वाराह-धाम छ ।।

धमिलो, नूनिलो, तातो होला सम्पूर्ण सिन्धु त ।
अति सङ्लो मीठो, चीसो तालका बिन्दु बिन्दु छ ।।

जल जन्तु उहाँ होलान् साऱ्है घोर भयङ्कर ।
यहाँ छन् लाम्चिला आँखा जस्ता माछा मनोहर ।।

डरलाग्दा तरङ्गको होला आगार सागर ।
यहाँ तरङ्ग छन् साऱ्है मसिना र मनोहर ।।

यत्तिले हुन्छनेपाल कम संसारमा यदि ।
हाँसेरै सहनु पर्ला ! अपमान परे जति ।।

हेर यो तालको ताल कस्तो चाल रचाउँछ ।
चन्द्रलोक खिची याँही नौलो नाच नचाउँछ ।।

आकाशे बिजुलीद्वारा त्यहीं बत्ती जलाउँछ ।
छहराको चीसो पानी पिई मस्त अघाउँछ ।।

अरू राकेट कल्पेर जान्छन् रे चन्द्रलोकमा ।
तालमा आउँछन् आफैं घुम्नका निम्ति चन्द्रमा ।।

उही व्योम उनै तारा उनै चन्द्र सुधाकर ।
देखदा तालका भित्र मनमा भ्रम पर्दछ ।।

तलको होकि आकाश माथिको हो यसै भनी ।
छुटयाउन ढिलो गर्छन कविका कविता पनि ।।

ती झिल्के चन्द्रमालाई आफ्नो मुहार हेरन ।
दिएछन् विधिले यस्तो स्वच्छ सुन्दर दर्पण ।।

ने नै ती चन्द्रमालाई जलक्रीडा गरुन भनी ।
दिएछन् विधिले ताल ! धन्य हौ चन्द्रमा तिमी ।।

लिएर साथमा धेरै ती तारा युवतीहरू ।
अनन्त स्वर्गको सौख्य भोग्दछन् चन्द्रमा बरू ।।

ती तारा दुलही पाई ताल दर्पण पाउनू ।
रहेछौ भाग्यमान् चन्द्र ! महिमा कति गाउनू ?।।

दिनमा दुनियाँ देख्लान् दुलही सँग खेलदा ।
भनेरै लाजले खेल्छौ रातमा तालमा सदा ।।

लिएर नक्कली-रूप हामीलाई भुलाउन ।
आकाशमा पनि बस्छौ ती तारा सँगली कन ।।

साँच्चैको रूप त्यो तिम्रो तालकै भित्र आउँछ ।
अनेकौं युवती तारा साथमा ली रमाउँछ ।।

माथिका नक्कली रूप चित्र झैं चुप चाप छन् ।
तालका सक्कली रूप हेर कस्तरी नाच्तछन् ?।।

(माथि ता न चली बस्नू तालमा अति नाचनू ।
तर्कका दृष्टिले हेर्दा छायाँ हो कसरी भनूँ ?)।।

तालकै चन्द्रमालाई साँच्चैका चन्द्रमा भनी ।
छर्दछन् छहरा अर्घ्य फूल ती लहरा पनि ।।

फूल औ अर्घ्य पाएर अति हर्ष भए सरी ।
लाग्दछन चन्द्रमा नाच्न ताल भित्र कला छरी ।।

त्यो कुनामा गई हे-यो चन्द्रमा त्यहीं हाँस्तछन् ।
फलि टाढा पुगी हे-यो उहाँ उस्तै तयार छन् ।।

यता चन्द्र उता चन्द्र तारा त्यस्तै यता उता ।
देख्दा श्रीकृष्ण-लीला झैं लाग्छ यो तालको कथा ।।

होइन आकाशको मात्र ताल यो दिव्य-दर्पण ।
धरतीको पनि हो यो राम्रो अध्यात्म-दर्शन ।।

छायाँका छहरा हेर छायाँका हेर पर्वत ।
छायाँका लहरा हेर कति सुन्दर दृश्य छ ।।

तल बाट उँभो बग्ने छहरा यस भित्र छन् ।
'उर्ध्व मूलमधः शाखा' यहीं संसार-वृक्ष छन् ।।

कहीं पहाड नाच्छन् त ? तालमा हेर नाच्तछन ।
कुरै छोडौं जहाँ प्राणी झुन्डिई पनि बाँच्तछन ।।

टाढाको नगिचै बन्छ मरेको नि पलाउँछ ।
सुकेको हरियो बन्छ हरियो कल्कलाउँछ ।।

जे हे-यो त्यै रसीलो छ जे हे-यो त्यै पवित्र छ ।
साँच्चैको पोखरा हेर तालका छाति भित्र छ ।।

माछापुच्छ्रे पनि आई ताल भित्र रमाउँछ ।
मान् माछाहरूबाट ठूलो स्वागत पाउँछ ।।

जता पुग्यो उतै दिन्छ छायाँ दर्शन यो गिरि ।
अनेकौं तर्क गर्दा हुन माछा आश्चर्यमा परी ।।

मत्स्यावतार हो ठानी गाउँदा हुन बरा स्तुति ।
"महामाछा ! नमस्तुभ्य तिम्रै छ शरणागति ।।

तिम्रो पुच्छर यत्रो छ शिर कत्रो छ ? ईश्वर ।
दिई दर्शन, उद्धार माछाका जातको गर ।।

मान्छे भन्ने कुनै जन्तु हामीलाई सताउँछ ।
बिना गल्ति हरे हाम्रो ज्यान मारी चबाउँछ ।।
बोल्दा दया अहिंसाको लामो भाषण गर्दछ ।
खाँदा माछा र मासुले अँध्यारो पेट भर्दछ ।।

माछा मारनका लागि जहाँ केन्द्र बनाउँछ ।
मत्स्य-पालनको केन्द्र खोलेका गफ लाउँछ ।।

भव-सागरका भित्र वेद चोरेर भागने ।
यै जात हो महामत्स्य शङ्खासुर भने हुने ।।
तालपारी यसै बेला भेंडा बाख्रा कराउँछन् ।
कुखुरी काँ गरी बारी कुखुराहरू बास्तछन् ।।
चर्न छोडेर 'आँ आँ इँ' पाडा, राँगा कराउँछन् ।
तालमाथि उडी चीं चीं चराका गण गाउँछन् ।।

मान् ती सबको बोली एउटै भाव खोल्दछ ।
यी माछाहरूले जे जे भने त्यो सब ठीक छ ।।

यो मान्छे नामको जन्तु छ यस्तै अति निर्दय ।
हामीलाई पनी काट्छ, मारी खान्छ सरासर ।।

यो सुनेर महामत्स्य अवश्य छट्पटाउँछन् ।
मान्छेको ओखती छैन ठानी ज्ञान बताउँछन् ।।
"हे सत्यव्रत ! माछा हो ! ज्ञान दिन्छु यहाँ सुन ।
महाविराट हो ताल जीवात्मा हौं सबै जन ।।

मारे, मरे, मऱ्यो भन्ने न ठानी मन्त्र यो जप !
नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावक ।।
'ब्रह्म सत्यं जगन्मिथ्या' कसैले यो बताउँछ ।
ब्रह्म मिथ्या जगत्सत्यं, कसैको मनशाय छ ।।

तर हेर यहीं विश्व ताल बाहिर सत्य छ।
फर्कदा तालका भित्र छाया हो कि त ? लाग्दछ ।।

अथवा कहिले मिथ्या कहिले सत्य बन्दछ।
नेति नेति यसै निम्ति वेदले पनि भन्दछ ।।

यद्वा यो ताल नै ब्रह्म ब्रह्म नै ताल हो गुन।
ब्रह्ममा तालमा कत्ति भेद छैन यहीं सुन ।।

ब्रह्मले जीवको सृष्टि माया द्वारा गराउँछ।
तालले जलको वृष्टि मेघद्वारा गराउँछ ।।

नित्य यो तालमा स्नान गर्दैमा मुक्त छौं भनी।
न ठान्नू कर्मले मुक्ति मिल्दैन कहिले पनि ।।

कर्मकाण्ड त बाटो हो देह शुद्ध गराउने।
ज्ञान हो मनको मैलो सारा साफ गराउने ।।

कि मेरो ध्यान नै गर्नु बुझ्दैनौ ज्ञान यो भने।
मै हुँ ईश्वर माछा हो ! भुक्ति मुक्ति दिलाउने ।।

मान्छे ईश्वरको रूप मान्छे जस्तै बनाउँछन्।
निराकार पनी ब्रह्म रूप त्यै लिइ आउँछन ।।

न ईश्वर छ मान्छे भै न माछा भै छ मत्स्य हो।
तै पनि भक्तले जस्तो चितायो त्यहि बन्छ यो ।।

हेर यी छहरा कस्तो तालमा भक्ति गर्दछन्।
धाएर प्रेमले नित्य गहमा आँसु भर्दछन् ।।

छल्किन्छन् प्रेमका आँसु झल्किन्छ विरह व्यथा।
कल्पिन्छन मनमा लाखौं प्रभुदर्शनका कथा ।।
सल्किन्छ पापका आगो जल्पिन्छन् तेज सात्विक।
प्रभु—दर्शनका निम्ति जब भक्ति उदाउँछ ।।

मुमुक्षु शिष्य जस्ता ती माछालाई भनी यति ।
पानीमा झिलिमली गर्छन् माछापुच्छ्रे महा-यति ।।

मानू त्यै झिलिमली गर्दा तालमा छाल उठ्तछन् ।
सभा उठ्दा उठी हिंड्ने भीड झैं छेउ लाग्दछन् ।।

मसिना मसिना उठ्छन् जब राम्रा तरङ्ग ती ।
कविको लेखनी उठ्छ तब राम्रा तरङ्ग ली ।।

हेर्दा हेर्दै अहा ! ताल मनमा भाव जाग्दछ ।
महा-मूर्ख पनी हाँसी कविता लेख्न लाग्दछ ।।

रेखा-गणित जान्नेले सम रेखा खिचेसरी ।
माछाको लहरी चल्छ ताल भित्र घरी घरी ।।

पानीमा पनि पानीको रेखा कलन चातुरी ।
माछाका बेगमा मात्र पाइन्छ विधिले गरी ।।

माछाले लहरी पार्दा सजिलै हो नि लाग्दछ ।
पानीमा पनि पानीको रेखा को लेख्न जान्दछ ? ।।

मान्छे सिपालु हूँ ठान्छ माछा त्यो देखी हाँस्तछन् ।
विना डुँगा घुमी ताल मान्छेलाई गिज्याउँछन् ।।
पानी जहाज सिर्जेर किन नाक फुलाउँछौ ?
हाम्रा झैं नाचदै घुम्न पर्ला मुश्किल जान्दछौ ।।

भनेर मनमा यस्तो ती माछा जब नाच्तछन् ।
वैज्ञानिक पनी 'थैय !' भनी नाक लुकाउँछन् ।।

टिलिक्क छाति टल्काई मिलिक्क मिल्किई कन ।
खेल्दछन् आफु ती माछा हर्दछन् अरूको मन ।।
ती माछा उफ्रँदा होलान् तालको दृश्य हेरन ।
भन्दछन् बिचरा मान्छे उफ्रेको सास फेरन ।।

सूर्यास्तको हवस् वेला साथमा सुन्दरी हउन् ।
मजाको पाइयोस् डुङ्गी मजाका गीत गाइयुन् ।।
मन्द मन्द चलोस् हावा मीठा मिष्टान्न खाइयुन् ।
हलुका हुन् सबै भेष मर्यादा छोड्न पाइयुन् ।।

वनका फूलको बास्ना पनि सर्वत्र छाइयोस् ।
यति नौताल जोडेर तालमा घुम्न पाइयोस् ।।

अनि को खोजला स्वर्ग को राजा हुन खोजला ?
को पेट्रोल र क्वैलाका धुवाँको देश रोजला ? ।।

बराहको हुँदा सानू टापू बीचमहाँ अहा !
स्वर्ग जाने डुँगा हो कि ? जस्तो लाग्दछ देखदा ।।

साँच्चैनै यसको शोभा यसैमा मात्र मिल्दछ ।
आकाशको जगतैमा उपमा किन मिल्छ र ? ।।

अघि बराहले ल्याई जलबाट धराकन ।
राखेथ्ये यसरी भन्ने छोडेहुन् नमूना दिन ।।

श्वेत द्वीप छ रे राम्रो श्री विष्णु भगवानको ।
नमूना उसके हो कि त्यसै यो जानिसक्छ को ? ।।

त्यसै ताल थियो राम्रो विघ्नै राम्रामनोहर ।
बराह द्वीपको खाँचो क्यै थिएन यहाँ तर ।।

असाध्यै नक्कली रै छ सृष्टिकर्ता महेश्वर ।
सिगार्‍यो तालका बीच थपी यो द्वीप सुन्दर ।।

"दूधमा राखनू मिश्री घिऊ बासमती महाँ ।
गहना चाहिनू राम्रो युवतीका शरीरमा ।।
राजाको गाउन कीर्ति ज्येठाले राज्य पाउनू ।
तालमा द्वीप यो बन्नू" ब्रह्माको विधि के भनूँ ? ।।

छलक्क छल्किई पानी द्वीपगा जब नाच्तछ ।
यो द्वीप विधिको नौलो सृष्टिको रूप बन्दछ ॥

यो ताल कसरी जन्म्यो ? कसरी द्वीप यो बन्यो ?
कसरी भरियो पानी ? शङ्का उठ्छ जती भन्यो ॥

स्वर्गको उपमा होला होला वैकुण्ठको बरु !
बाराह द्वीपको जस्तो छैन दृश्य कहीं अरू ॥

जाली पापी कने बाँध बाँध प्रेम सबैमहाँ ।
भन्ला भैं तालको बाँध झल्किन्छ अग्निकोणमा ॥

बनेको व्हैन यो बाँध ताललाई भराउन ।
पछि बनाइएको हो खेती बालो लगाउन ॥

एघारै रुद्रका निम्ति जलधारा दिए सरी ।
यहाँ एघार धारा छन् बगेका बेगले गरी ॥

बाँध हेर्न गए देखि बाँध नै अभिराम छ ।
टापू हेन गए उस्तै टापू नै सुखधाम छ ॥

न यहाँ गाउँछन् पक्षी न यहाँ फूल फुल्दछन् ।
न यहाँ झरना झर्छन् मान्छे तै पनि भुल्दछन् ॥

हिमाल, गण्डकी शुक्ला, वन नन्दन कानन ।
नसम्झ तालमा आई हेलाँ गर्दछ यो मन ॥

कराई कानका कीरा खान्छन् रे वनका चरा ।
चीसो स्याँठ चलाएर बस्छन् रे हिमटाकुरा ॥

हिलै हिलो छरे राम्रो पद्मको पोखरी—अनि ।
कराई सबको सातो खान्छिन् रे गण्डकी पनि ॥

वनमा बिझ्दछन् काँडा जन्तुको डर लाग्दछ ।
फल जाबो जती खायो उत्तीनै भोक जाग्दछ ॥

थकाई लागदा घुम्न ढुंगा पाइन्न क्यै गरी ।
तालका सामुमा पर्छ फिका सम्पूर्ण माधुरी ॥

तालका काखमा टापू, टापूका काखमा तिमी ।
तिम्रा काखमहाँ राम्रा कविता का नितम्बिनी ॥

जहाँ भए पनी कल्प दृश्य यो अति सुन्दर ।
ढाढा छौ पोखरा हेर्ने यदि मिल्दैन फुर्सत ॥

उपर्युक्त सबै सेवा फेवाको मात्र हो तर ।
पोखरामा अनेकौं छन् ताल यस्ता मनोहर ॥

कुनैको नाम हो रूपा कुनैको बेगनाश हो ।
ठूलो साना त जे जे छन् यो शोभा एकनाश हो ॥

रूपाको रूप झिल्केछ छ बेग्लै बेगनाशको ।
फेवा प्रकृतिको पेवा के खोजी अरू तालको ? ॥

हेर्‍यौं पहाड बीचमा यसरी विशाल
यो तालको प्रकृति–सुन्दर चाल माल ।
जाऊँ सखे ! अब उता तिर पद्मिनी छन् !
झिम्काउँदै नयन चित्त भुलाउँनिन् झन् ॥

षष्ठ सर्ग

# कमल पोखरी

यस्तै इशानमा राम्रो सानो कमल-पोखरी ।
गमक्कै छ नि गम्केको मोहिनो दृश्यले गरी ।।

यहाँका फूलको दृश्य सा-हे नै अभिराम छ ।
पुगे भने यता आँखा सारा विश्व बिकाम छ ।।

पोखरामा जसै रातो सूर्यको ज्योति पर्दछ ।
यता कमल यी फुल्छन् उता हिमाल खुल्दछ ।।

हिमालले र शुक्लाले पोखरा सुनकै थियो ।
पद्म पोखरीले गर्दा सुनमाथि सुगन्धि भो ।।

ज्यादै विस्तृत यो छैन छैन यो साँगुरै पनि ।
जस्तो चाहिनु पर्ने हो छ उस्तै रूपको धनी ।।

ठूलो मेला यहाँ लाग्छ आउँदा नागपञ्चमी ।
तैपनि दर्शनार्थीको यहाँ हुन्न कवै कमी ।।

नारी पुरुषका निम्ति एकै हो नागपञ्चमी ।
किन्तु पुरुषको हुन्छ मेला लाग्दा यहाँ कमी ।।

चामलैमा बियाँ जस्तै एउटा दुइटा नर ।
आते पाते गरी हिड्छन् छोडी ईश्वरको भर ।।

अथवा मनमा धर्म भए के कर्म चाहियो ?
अथवा कर्म नै छैन भने के धर्म पाइयो ? ।।

मेलाको दिन यो जेल्हे पोखरा आइपुग्दछ ।
नारी पुरुषको शोभा तेल्हे राम्ररि खुल्दछ ।।

चिल्ला चामल झैं नारी फुर्सा छन् धान झैं नर ।
नारीका रूपका साम्‌ लोग्ने मानिस के छ र ? ।।

धर्म व्रत पुजा पाठ उपास हरिकीर्तन ।
सबै सत्कार्यमा धेरै जुट्तछन् महिला-जन ।।

झगडा तगडा पर्दा कुटदा पीटदा महाँ ।
लोग्ने मानिसको भाग छ छुट्टै धेर देशमा ।।

स्वर्गका अप्सरा जस्ता नेपाली युवतीहरू ।
तीर्थ गर्न जसै हिड्छन उनको वर्णन के गरूँ ? ।।

छिनेको बारुले कट्टी पोटिला स्तन मण्डल ।
तीर्थ जांदा पनी लान्छन् तिनको काम के छ र ? ।।

पहिल्यै तीर्थमा पुग्छन् हंस झैं गति चालदै ।
तीर्थदेव कनै ढोग्छन् किन्नरी सरि नाचदै ।।

आङका कपडा खोल्दा राम्रै नाटक रच्तछन् ।
हेरदै छातिमा आफना पानीका भित्र पस्तछन् ।।

जल बाहिरमा सारा विश्वले नै गिज्याउंछ ।
जलमा पानीजूकाले कातिकूति लगाउंछ ।।

आच्छू लीन, अहो ! छिः भो आब्बुई ! शब्दले गरी ।
पानी-जूका कनै दिन्छन् गाली माधुर्यले भरी ।।

हेर्दछन् सँगिनीलाई भुतुक्कै लाजले मरी ।
स्नान गर्दा पनी जान्न शृङ्गार-रस-माधुरी ।।

मुख मण्डलको शोभा जलमा अति खुल्दछ ।
मुख औ फूलको भेद उस्तै मानिस भुल्दछ ।।

फूलमा भमरा जस्तै कलिला मुखमा पनि ।
पल्याक पुलुक् गरी चल्छन् दुई आँखा सनातनी ।।

आलीका पहिरी माला मालीका बाग झैं गरी ।
यहाँ खेत सुतेको छ पोखरीका वरी परि ।।

वर्षाको दप्दपे हीलो जब गम्कन थाल्दछ ।
खेताली रूपमा फेरी नारीको दल पाल्दछ ।।

पोखरीका हिलामा र यो खेतीका हिलामहाँ ।
देखिन्छन् नाचिराखेका पद्म-पुष्प जहाँ तहाँ ।।

नारीका विरुवा सारी अर्के कमल पोखरी ।
बनाउँछन् कि ब्रह्माले भन्ने लाग्दछ यो घरी ।।

अथवा युवती पुष्प विश्वमै नित्य फुल्दछ ।
यहाँ कमलको दृश्य राम्ररी अब हेर्नु छ ।।

पोखरीमा झुलेका छन् हजारौं पुष्करावली ।
यसैबाट भयो होला पोखरा पुष्करावती ।।

लक्ष्मीको नाम हो पद्मा ब्रह्माको कमलाशन ।
विष्णुको पुण्डरीकाक्ष धन्य हो ! नलिनीवन ।।

को छ पङ्कज झैं ठूलो देवता तीनलोकमा ?
शृष्टिकर्ता स्वयं ब्रह्मा जन्मेका हुन् यसै महाँ ।।

यो जन्मिन्छ हिलाबाट अति शुद्ध प्रभाघरी ।
दैत्यका कुलमा भक्त प्रल्हाद जन्मिए सरी ।।

विष्णुका नाभिमा जन्मी जो मान पद्मको थियो ।
हिलामा छ उही सत्य मानिने गुण मात्र हो ।।

वैलाउँछन् हरे ! पद्म चन्द्रोदय भए पछि ।
चन्द्रको नलिनी हाय सौताने नाल रैछ कि ?।।

सूर्य हुन्छन सबैलाई पोलने र सुकाउने ।
विचित्र छ उनैबाट पद्म यी कल्कलाउने ?।।

कोपिला कलिला राम्रा सम्पुटाकार भैकन ।
देखनेको हरी चित्त लाउँछन् मोहिनी झन ।।

गोरा पङ्कजको ताँती भमराले छ शोभित ।
गोपिनी गणमा मानू कृष्णको मुसकान छ ।।

फूलको रस चूसेर भोगेर सुख सौरभ ।
ती स्वार्थी भमरा जान्छन् छ जहाँ कलिलो फूल ।।

रसका निम्तिमा मात्रै यो हामी सँग बस्तछ ।
जानी जानी पत्नी दिन्छन् पद्म आफ्नो कलेवर ।।

दिनमा भमरा उड्छन न लुकीकन घुम्दछन् ।
रातमा किन हो कुन्नि ! ढोका लाएर लुक्तछन् ।।

फूलका कलिला ओठ मिठ्याएर झुमी झुमी ।
कामिनी भामिनी तुल्य गर्छन् चुम्बन पद्मिनी ।।

तिम्रो राजी छ वा छैन ? भमरा अनि सोद्धछन् ।
बोल्दैनन् पद्म ती किन्तु हाँसी स्वागत गर्दछन् ।।

दिनमा अरू नाता छन् छन् दिदी बहिनी सब ।
रातमा भमरा पाये बिर्सन्छन् यो चराचर ।।

ती राम्रा पद्मिनी नारी ती काला भमरा सँग ।
किन होलानि पल्केका मलाई लाग्छ विस्मय ।।

अथवा रूपका लोभी लोग्ने मानिस मात्र हुन् ।
आइमाईहरू खालि गुण मात्रै अँगाल्दछन् ।।

जून आकाशमा लागे टल्किए तारकागण ।
तर ती पद्मिनी कत्ति छोडदैनन् दृढ चुम्बन ।।

भमरा एक रातैमा टोकी च्यापी चुसी कन ।
लिन्छन् कमलको हाय ! त्यस्तो सुन्दर जोवन ।।

बिहान लाग्दछन बेग्लै हिजोका पद्मिनी सब ।
ओठको लालिमा छैन शिरको छैन केसर ।।

रातको बात सम्झेर भेटदा संगिनी अरू ।
भुतुक्कै लाजले मर्छन् पद्मिनी प्रमदाहरू ।।

रातमा सजिलै हुन्छ ज्यान अर्पेर खेलन ।
उज्यालामा त गाह्रो छ रातको बात संभन ।।

दिदीको पनि त्यै चाल त्यै चाल बैन्हिको पनि ।
कसको लाज को मानोस् को भुकोस् लाजले अनि ।।

पानीका डरले हो कि जाडामा भमराहरू ।
छोडी कमलिनीलाई अन्त जान्छन् खुरू खुरू ।।

यसै ता ऋतु जाडाको त्यसैमा तीव्र जोवन ।
उसैमा दैवले पार्दा एकलै रात काटन ।।

पटक्कै नींद लाग्दैन सल्किन्छ विरहानल ।
शीतका आँसु झारेर सुक्तछन् पद्मिनी सब ।।

अथवा भमरा जावा नक्कली जार मात्र हुन् ।
सांच्चैका पद्मिनीनाथ भगवान् सूर्यदेव हुन् ।।

रातमा छोड्दछौ सूर्य ! यी राम्रा दुलही सब ।
दिनमा खिस्स हाँसेर के गर्छौ ख्वै र ? वास्तव ।।

सबै पतिव्रता हुन्नन नलेऊ यिनको भर !
अब देखि सुन्यौ सूर्य रातमा आउने गर ।।

"रात नै दिन पल्टन्छ म आएँ" भन्दछौ भने ।
ढीलो चाँडो गरी झुल्की दुलहीको चियो गरे ।।
ए साँच्चै के भनें यस्तो ? सूर्यले के न जान्नु : छ ।
ढीलो चाँडो गरी प्राय: झुल्कने चल्तिनै त छ ।।

बाठा छौ भगवान् सूर्य ! अस्ताएर गए पनि ।
चन्द्र-दर्पण हेरेर बुझ्दछौ भूमि जीवनी ।।

तर छन् बहुतै बाठा यी तिम्रा पद्मिनी पनि ।
झ्याल ढोका सबै थुन्छन् झुल्काँदा चन्द्रका मनि ।।

यति राम्रा शशीलाई यसरी छोड्दछन् यदि ।
ती काला भमरालाई मान्दा हुन् कसरी पति ?।।

यत्ति मै तिमी गम्कन्छौ देख्तैनौ भित्रको गति ।
'स्त्रिया चरित्र' जानेर चल हे पद्मिनी पति !।।

हुन् मेरै दुलही भन्ने लोकलाई चिनाउन ।
बिहान बेलुका छर्छौ राता सिन्दूरका कण ।।

मनमा न भए शङ्का अरूलाई चिनाउन ।
सधैं सिन्दूर हाल्ने यो चल्ती पो भिक्तथ्यो किन ?।।

हरे संसार कस्तो छ ? कमजोर हुँदा मन ।
आफैं क्यै पाप कल्पन्छ आफैं त्यै लाग्छ नाशन !।।

भैगयो यसरी निन्दा किन गर्नु महानको ।
मरुन् बाँचुन् कि के खाँचो यी अर्काका जहानको ।।

कुरौटे आफुले बन्नु अर्कालि दुःख पाउनु ।
भन्दा त अति जाती हो जिब्रो काटेर फाल्नु ।।

अहा ! यी कमला फूल क्या संसार भुलाउँछन् ।
विश्वका विरही छाती यसैमा बहुलाउँछन् ।।

जसै मदनको आगो मनमा बल्न थाल्दछ ।
विलासिनीहरूलाई वनमा यै सहाय छ ।।

पानीका मसिना बिन्दु छर्केका फूल लीकन ।
कामाग्नि शान्तिका निम्ति ढाक्तछन् कामिनी स्तन ।।

आफैं कमल जस्ता ती कमला स्तनलाई त ।
पतिका हातको स्पर्श भन्दा यो सुखदायि छ ।।

तर मन्मथको पीडा यसले बढ्छ हर्हर ।
दन्केको वनको आगो खरले कहिं निभ्छ र ? ।।

साह्रै ठूलो छ महात्म्य पद्मको-इतिहासमा ।
बिलायो अहिले हा ! त्यो आत्तुरीका विकासमा ।।

पद्मका फूलले खुल्थ्यो नारीको मुखमण्डल ।
नारीका मुखले खुल्थ्यो सारा पृथिवी-मण्डल ।।

पृथ्वीमण्डलले खुल्थ्यो ब्रह्माको मुखमण्डल ।
ब्रह्मा हाँसे भने खुल्थ्यो सारा ब्रह्माण्डमण्डल ।।

नलीका बन्दथे बाला फूलै श्रीफूल बन्दथे ।
थुँगै थुँगा मुगा बन्थे व्यर्थै हो 'सुन' भन्दथे ।।

नाकमा कानमा घेरै छेद यी चाहिँदैनथे ।
अङ्गमा चोरको नाशो बोकेका पाइँदैनथे ।।

घरबारी सबै बेची गहना लाइँदैनथे ।
'गहना गहना' ! गीत यसरी गाइँदैनथे ।।

युगले गहना ल्यायो रित्यायो दुनियाँ पनि ।
अब हट्लाकि ? जस्तो छ पद्मका पोखरी मनि ।।

लाऊ नलाऊ क्यै छैन अन्तका गहना सब ।
'बुलाकि लांकि वा छोडूँ' भन्दछन् अबला अब ।।

नलाऊ कानमा सून राम्रा–राम्रा कुरा सुन ।
ढुंग्रीका ठाउँमा ढुंग्रो ध्यू दही दूधको किन ! ।।

नपेह्ल चन्द्रमा ! हेर राम्रा छन् चन्द्रमा त्यसै ।
मुख चित्त दुवै धोऊ राम्री नै छौ तिमी उसै ।।

सुनमा न सुगन्धी छ कमलो छ न छामदा ।
रुद्राक्ष तुलसी जस्तै पवित्र बस्तु हो न ता ।।

यसै यो कलिको वास असाध्यै महँगो अभ ।
शोचेर मनमा हेर गहना व्यर्थ ह्वँन त ? ।।

शास्त्रको विधि हो पर्छ नाक कान त छेडन ।
नारीको धर्म हो पर्छ गहना पनि पैन्हन ।।

तर यहाँ त छेड्छन्कि गाला आँखाहरू समेत् ।
ठानेर यो भनेको हो "अति सर्वत्र वर्जयत" ।।

कपाल चट्ट कोरेर स्यूँधामा छ र सिन्दुर !
आँखामा गाजलू लाऊ मुख मुस्कानले भर ! ।।

कपडा सुकिला पैन्ह घर्बुनाकै भए पनि ।
चुल्ठाका फूलका गुच्छा राख ! हुन् गहना यिनी ।।

खुशी भै मनमा ठान रानी हूँ घरकी भनी ।
अनि दर्पणमा हेर कस्ती छौ सुन्दरी तिमी ।।

यसरी सत्य आदर्श जुन बेला समाउला ।
नारी हो अबलाबाट सबला बन्न पाउला ।।

हुँदा तलाउको पानी सिन्दुरै सरि सुन्दर ।
पद्म हेर्नु कि त्यो पानी हेर्नु ? यो भ्रम पर्दछ ।।
तर जानी विधाताले दुई आँखा दिएछन ।
नभए कसरी हाय बुझ्दो हो रसिलो मन ।।

जहाँ सरोज फुल्दैनन् ती तलाउ तलाउ के ?
जहां भ्रमर गुञ्जदैनन् ती सरोज सरोज के ?।।

जहाँ सज्जन नै छैनन् त्यो के गुञ्जन गुञ्जन ?
पग्लन जसको छाती त्यो के सज्जन सज्जन ?।।

बसी यो पोखरी भित्र भ्यागुतो पनि गाउँछ।
को होला हृदयी त्यस्तो ? जो यहाँ न रमाउँछ ।।

कस्ता छन् दुलही तिम्रा ? सोद्धा हुन् देवतागण ।
दिंदा हुन् सूर्य हाँसेर यस्तो उत्तर त्यै छिन— ।।

"छोए ढल्लान् कि जस्ता छन् देख्दामा कलिला अति ।
राम्रा छन् हातले छूँदा मैलेलान् कि भने जति ।।"

लजालु युवती जस्तै पोखराका कुनामहाँ ।
लुकेका पद्मिनीलाई सबैले देख्तछन् कहाँ ?।।

तै पनि सूर्यले देखे देखे भ्रमरले पनि ।
अनि मैले पनी लेखें देखिहालुन् सबै भनी ।।

कलिली भरिली विलासिनी
नलिनी सङ्गमको लियौं सुख ।
बरु र्गम भयो कि ? खाउँ लौ
गलिया छन् तल सुन्तला अब ।।

**सप्तम सर्ग**

# सुन्तला

गम्किन्छ पोखरा सान्हैं हेमन्त शिशिरैमहाँ ।
सुन्तला जब चम्कन्छन् घारी घारीमहाँ यहाँ ।।

सुन्तला नाम भन्दैमा मुख मेरो रसाउँछ ।
जिउरो छट्पटी गर्छ चित्त भन् ललचाउँछ ।।

किन्दामा यसका निम्ति तोला सून दिए पनि ।।
सुहाउँछ भनी नामै सुन्तोला राखिएछ नि ।।

कसैले सुन्तला भन्छन् सुन्तोला भन्दछन् कुनै ।
सन्तला भन्दछन् कोही जे भनुन् फल हुन् उनै ।।

टाढाबाट पनी राम्रै चिनिन्छन् सुन्तला-तरु ।
हरिया हरिया पात घना हाँगा-बिगाहरू ।।

नाम नै सुन्तला राम्रो काम नै गुलियो मिठो ।
ठाम न पोखरा जस्ता कस्तो खेल छ दैवको ?।।

हिमाल, ताल, नेपाल राम्रा हुन् खालि देखन ।
सुन्तला फल मात्रै हो राम्रो देखन चाखन ।।

न ठान्नू सुन्तलालाई सामान्य फल क्यै गरी ।
आँप, केरा, लिची, स्याउ, नास्पाती, जामुनू सरी ।।

जरा, हाङ्गा बिंगा, पात, कोपिला, फूल श्रो फल।
सबै बसाउने मीठो श्ररू क्वै फल हुन्छ र ।।?

फुल्दामा देश नै हुन्छ सान्है मगमग बासको।
फल्दामा शेखि नाशिन्छ सूनकै पनि राशको।।

फालेका यसका बोक्रा 'सूनै हो कि ?' भनीकन।
टीपदामा विदेशीको बोक्रिइन्छ कठै ! मन।।

श्राँखाले हेर्दछन् बोक्रा ज्यू-हाले रस चुस्तछ।
नाकले बासना लिन्छ भै मस्त देह झुल्दछ।।

भित्र छन् सुनकै केश्रा गुलिया रसिला श्रति।
सुनैको बाहिरी बोक्रो खर्च गर्नसके कति ?।।

सुन्तलेले त होला नि सकेछन् विधिले धन।
यौटा धोती लगाएर मुड्लै हिंडदथे किन ?।।

कीर्तिका लाभले ब्रह्मा ! सुन्तलामै सक्यौ धन।
छोरी सरस्वतीलाई पेवा के-के छ ? लौ भन।।

श्रथवा सोध्नु पो के छ ? यदि पेवा भए किन—
हुन्थ्ये सरस्वती-भक्त संसारै भरि निर्धन ?।।

राखेनन् धन ब्रह्माले नडराऊ सरस्वती !
कविता-धन श्रर्पन्छौं तिमीलाई सबै कवि।।

पैसा पैसा सबै ऐसा गर्दा भै नष्ट पर्दछन्।
कविता-धन हे देवी ! जुगौं श्रस्तित्व धर्दछन्।।

पैसाले नींद लाग्दैन शान्ति पाइन्न श्रन्त्यमा।
दया नाश्शिन्छ भास्सिन्छ धनी मान्छे श्रनन्तमा।।
कविता-धन बोकेका सब हामी सरस्वती।
तारा बनेर चम्कन्छौं हाँसी खेली सधैं भरी।।

किनेका सुन्तला मात्र धनीका हात पर्दछन् ।
फलेका सुन्तला सारा कवि चाखेर मस्त छन् ।।

सुन्तलाको हुँदा स्वाद अमिलो गुलियो अहा !
चोरी औंलो पुगिहाल्छ गालामा रस चाखदा ।।

कतिको हात ताछिन्छ नाश्पाती ताछ्दा महाँ ।
कुँडिन्छन् कतिका दाँत निबूआ निलदा महाँ ।।

उखूले जिउरो पार्छ नामै काफल के फल ?
स्याउ खाँदा पनी ज्याउ सुन्तला नै अपार छ ।।

'चाहिन्नन् पासमा चक्कू अकस्मात् हात काटला ?
मलाई सजिलै खाऊ' भन्दो हो मित्र सुन्तला ।।

पातमा गुलियो छैन छैन हाङ्गामहाँ पनि ।
फलमा कसरी आयो ? जानि सक्नु त छैननि ।।

आयुर्वेदिक शास्त्रैको हो यो पौष्टिक औषधि ।
यसैबाट जुगौं बाँचे हाम्रा पूर्खा महातपी ।।

खानाको भाँति चाहिन्छ सके भाँति पुऱ्याउन ।
सबै पाउन सक्नेछन् ऋषि झैं दिव्य–जीवन ।।

साना, केश्रे, सफा, गोरा, रसिला पुष्प कोपिला ।
सुन्तलामा जसै लाग्छन् सिलमन्द्री समानका ।।

उड्छ अत्तर, श्रीखण्ड लिन्छ खण्डित जीवन ।
चमेली बन्दछन् फीका चम्पा बग्छ लुकीकन ।।

आउँछन् चाल पाएर किसानी माहुरी त्यहाँ ।
सोमयाग सुरु गर्छन् दक्षिणा दी प्रदक्षिणा ।।
वेदमन्त्र पढे जस्तै धेरै ब्राह्मणले मिली ।
गुँ गूँ हुँ हूँ गरी राख्छ मौरीको शब्द माधुरी ।।

पानी बर्सोस् कि वा जागोस् वेगले वृक्षमा हुरी ।
सुन्तला पुष्पको भक्ति छोड्दैनन् दृढ माहुरी ।।

ती सेता फूलका भित्र छ कस्तो गुलियो मह ।
हेर यो कविताभित्र, सोध या माहुरीसँग ।।
भूँ भूँ भूँ भूँ गरी मौरी भन्छन् मान्छेहरूसँग ।।
"ए मान्छे बुद्धिका खोटा सिक्न अक्किल आइज '!।।

"तँ खाली फलमा मात्रै गुलियो रस पाउँछस् ।
फूलमा अझ कस्तो छ ? कल्ह्यै तर्क लगाउँछस् ?।।

हेर् ! हामी फूलको कस्तो भिक्तछौं गुलियो मह ?"
माथि माथि न उड् ! बाबै यै-हो छ श्रृष्टिको रह ।।

हाम्रो आर्जन चोरेर डाँका हालेर लुट्तछस् ।
त्यसैको प्रभुका निम्ति पञ्चामृत चढाउँछस् ।।

मारी रेशमका कीरा चोखा वस्त्र लगाउँछस् !
लुते कुक्कुर देखेमा चूचे ढुङ्गो उठाउँछस् ।।

तै पनी त महासभ्य अति आचारशील छस् ।
दया धर्म र विद्याको ठेक्का बोकेर नाच्तछस् ।।

ढाँट्तछस् भगवान्लाई लाटालाई सरी गरी ।
यसरी काम चल्दैन गर स्वयं श्रम बेसरी ।।

कसौंडी, ताउलाले भैं खरानी जिउमा घसिस् ।
बकुल्लाले सरी दाउ हेर्दै ध्यानमा बसिस् ।
दूधका डाड़ले जस्तै विद्या सागरमा डुबिस् ।
रेल मोटरले जस्तै तीर्थ यात्रा पनी गरिस् ।।

छापाखानाहरूले भैं छापिस् ग्रन्थ बडा बडा ।
रेडियोले सरी बोली स्तब्ध पारिस् महासभा ।।

तँ मा लाल्टिनमा जस्तै ज्ञान बत्तीहरू बले ।
जती बाल्यो उती काला तेरा भित्री नसा भए ॥
छोरी बेचे सरी बेचिस् तैंले आत्माकनै पुरा ।
खसी काटे सरी काटिस् पुराना ऋषिका कुरा ॥
तिथि तोकेर जो आयो त्यो तेरो अतिथि भयो ।
जहाँ खबर छापिन्छन् तेरो त्यो अखबार हो ॥
यस्तै यस्तै अनेकौं छन् तेरा सुल्टा कुराहरू ।
हाम्रो भाषै तँ बुझ्दैनस् किन बोलौं यहाँ अरू ?॥
माछा मार्न, शुगा थुन्न, मौरीको मह चोरन ।
एउटा ज्यानका निम्ति धेरै ज्यान मराउन ॥
आमा पृथिवीको छाती चिरी भाउ लगाउन ।
निदाएर घुरी आफू अर्कालाई जगाउन ॥
माउका दूधका साथ पाडाको रक्त मूछन ।
कल्चौंडा जसको तान्यो उसैको मासु लूछन ॥
तिमीबाट सिके देखि यस्तै विद्या सिकाउला !
हो कि होइन ए मान्छे ! भने देखि रिसाउला ॥
वर्षेनि सुन्तला फुल्छन् मौरी वर्षेनि आउँछन् ।
मान्छे यस्तै सधैं गर्छ मौरी यैं नित्य गाउँछन् ॥
देखिन्छन् सुन्तला घारी वारी पारी थरी थरी ।
दीपावली गरी बत्ती बालेका घरकै सरी ॥
हावा लागेर निभ्दैनन् निभ्दैनन् बर्षिई जल ।
पहेंला बिजुली बत्ती हुन्कि यी सुन्तला फल ?॥
वैज्ञानिकहरूभन्दा सिपालू छौ जगत्पति ।
विना तार पनि बाल्यौ बिजुली यो जगत्भरी ॥

मिलाएर सजाएका सुन्तला बेच्ने घर ।
रत्न-भण्डार झैं लाग्छन् सस्ता छन् किनदा तर ॥

अबला अब लाई त सार्है हर्ष मनाउँछन् ।
सुन्तला पाउँदा खेरि सुन्तलाउन छोड्दछन् ॥

को खोजोस् गहना जैरे नाक कान दुखाउन ।
छोडेर सुनका बाजे यी राम्रा सुन्तला कन ॥

सुन्तला खानुहोस् दाजी ! छन् मीठा रसिला भनी ।
हेर्दछन् गाउँकी बाला हातमा सुन्तला गनी ॥

दुई दाना किनी खायो हाँसी भन्छन् "लिनोस् अरू" ।
न हाँसी बोल्न जान्दैनन् यी हाम्रा बहिनीहरू ॥

हाँसेको त्यो मीठो बोली पाकेका ती मीठा फल ।
तातेको यो खरो आँत न किनी मन मान्छ र ? ॥

डालीका सुन्तला देख्दा गोजी खाली भए पनि ।
नछाती मन मान्दैन क्या धन्य ! सुन्तला छ नि ॥

सर्दी हो फल्छ जाडामा हुन्छ तैपनि दुर्लभ ।
गर्मीमा यो हुँदो हो त सकिन्थ्यो इन्द्र वैभव ॥

गर्मीमा म पुर्याउन्न ठानेर विधिले पनि ।
जाडा ताका हुने चलितचलाए चतुरा बनी ॥

अथवा सुन्तला भित्र वैद्यशास्त्रानुसारतः ।
हिउँदे ऋतुमा मिल्ने जस्तो पौष्टिक वस्तु छ ॥

फलमा औषधी भर्न फूलमा भरने छवि ।
सबै भन्दा सिपालु छ माथिको लहडी कवि ॥

सुन्तला कहिले खानु ? कहिले आँप चूसनु ।
कहिले नास्पाती खानु यस्तो ठीक्क विचारनु ॥

जड प्रकृति के जान्लिन् आफैं के हुन सक्तछ ?
यसैले ईश्वरी सृष्टि भन्नमा बल मिल्दछ ॥
अहा ! यी सुन्तला सारा कति सौन्दर्य पूर्ण हुन् ?
लचक्क फलको भारी बोकी विश्व भुलाउँछन् ॥

पहेंला फल पैऱ्हेका सुन्तलाका बुटा मनि ।
सुनका गहना पैऱ्ही जब पुग्छन् विलासिनी ॥
कत्ती फरक देख्तैन सोचेर हेरने जन ।
दुवै छन् रसिला राम्रा दुबै छन् मनमोहन ॥

झपक्कै फल बोकेका सुन्तलाका बुटा यता ।
छपक्कै सुन छापेका सुन्दरीका लता उता ॥
हरियो रेशमी चोली सुन्दरी यी रुचाउँछन् ।
हरियै पातको चोली सुन्तलाहरू लाउँछन् ॥

डालीमा फल बोकेर बेपारी-जनकै सरी ।
सुन्तला यी डटेकाछन् मोल पाउन बेसरी ॥
यौटा चिन्नल यत्ती छ होचा छन् युवतीहरू ।
अग्ला छन् सुन्तला-वृक्ष भेद छैन कुनै अरू ॥

रोजेर सुन्तलालाई पक्षी नै खान पाउँछन् ।
पक्षीले जत्तिको मान विपक्षी किन पाउनन ॥
पक्षी भनेर के गर्ने ? विपक्षी जनकै सरी ।
सक्तछन् सुन्तललाई ती पक्षी रसमा परी ॥

संतलाई सरी राम्रै व्यवहार गरे पनि ।
संतलाई सरी राम्रै सक्ने कोही हुँदैन नि ॥

हरिया पात छोपेर सुन्तला जब झुक्तछन् ।
पहेंला हरिया पंछी क्या मजासँग लुक्तछन् ।।

यी मीठा सुन्तला छोड्ने चरा छैनन् कुनै तर ।
कागले त अझै पक्की बनाउँछ यहीं घर ।।

"बसूँ है ? सुन्तला खान !" भनी पैल्हे फकाउँछ ।
केश्रा केश्रा सबै खाई बोक्रा छोडी छकाउँछ ।।

म उल्टो कि जगत् उल्टो काग उल्टो कि होस् कछु ।
"चरो, भन्दछ ससार म सधैं चोर भन्दछु ।।

कुनै नाच्न भुलेकाछन् कुनै गाउँन मस्तछन् ।
काला काग सरासर्ती सुन्तला खान बस्तछन् ।।

"चरो होस् सुन्तला खान आइहालिस् त भै गयो ।
सुना कोइलिले जस्तो गीत एक अती मीठो" ।।

"भनूँ कि ? मनमा सोच्यो काग "काका!" कराउँछ ।
'काका' गुहारनै पर्ने पारेछन् कि ? गराउँछ ।।

"सबै ईश्वरको बारी सबै ईश्वर-पुत्र ह्वौं ।
ए पन्छी ! यो कुरा हामी शास्त्रमा मात्र भन्दछौं ।।

बाहिरी काम पर्दा त तेरो मेरो छँदैछ नि ।
आयौ यी सुन्तला खान कुन नाता लिई तिमी ?।।

"द्विज हूँ, कृष्ण हूँ फेरि एक नेत्र म शुक्र हुँ ।
समाचार दिने ताजा देवर्षि कलिको म हुँ ।।

प्रसिद्ध शास्त्रविज्ञाता भक्त काक भुसुण्डि हुँ ।
सीता-पाऊ पनि ठूड्ने काग—रूपी जयन्ती हुँ" ।।

भन्नेछ मनमा तिम्रा भने ए काग ! यो सुन ।
'प्राचीन गर्वले मात्र अब मिल्दैन गम्कन ।।

दिनमा सुन्तला चोर्न यी चराहरू आउँछन् ।
रातमा सुन्तला चोर्न चन्द्रमा नै उदाउँछन् ।।

नीला आकाशमा हेर चोरेका सुन्तला सब ।
तारा बनेर चम्केका लिन जान पर्‍यो अब ।।

'ए चन्द्र ! सुन्तला चोर ! तिम्रा गाला बजाउँला ।
नठाने उड्न सक्तैनन् राकेटै चढि आउँला ।।

पैसाले पनि पाइन्न नेपाली फलको रस ।
विना पैसा कहाँ दिन्थ्यौ ? सुन्तला हो ! छिटो खस ।।

दिउँला बरु मागेमा यहाँको मह गोरस ।
सुन्तलाको कसैं दिन्नौं चन्द्रमा ! महँगो रस ।।

हाम्रै बचनले हेर खस्नेछन् सुन्तला तल ।
तारा खसे भनी ठान्लान् न जान्ने जनता सब ।।

भो भैगो चन्द्रमा ! व्यर्थै न फाल सुन्तला तल ।
आकाशमै फिजारेर महँगो बेचने गर ।।

थुप्रिएका जती पैसा यौटा यौटा गरी गने ।
दिए स्वर्गीय-नेपाली बाटामा भेटिए भने ।।

स्वर्गमा सुन्तला छैनन् इन्द्रलाई पनि दिनू ।
के कस्तो मान्दछन् इन्द्र उनको भावना लिनू ।।

इन्द्रपुरी सभा बस्ता यो कुरा मनमा लिनू ।
'नेपाली सुन्तला' भन्ने एउटा भाषण दिनू ।।

चोर आउन् चरा आउन् भेद गर्दैन सुन्तला ।
साँच्चैका गुणवान् गर्छन् सबै माथि समानता ।।

यहाँबाट किनी लान्छन् पचासौं कोश सुन्तला ।
गुणीको खोजनी हुन्छ पृथिवीमा जता तता ।।

बेच्नेले सुन्तला बेच्छ, किन्नेले किन्छ सुन्तला ।
भेटीमा सुन्तला जान्छ, कोशेली बन्छ सुन्तला ।।

खेतमा काट्नगो धान सुन्तलानै तयार छ ।
भान्सामा खानगो भात सुन्तलाकै अचार छ ।।

नेता नाता सबैलाई सुन्तला उपहार छ ।
जता जाउ जती खाउ सुन्तलाकै वहार छ ।।

पाएर एउटै स्वाद राजा – रङ्क रमाउँछन् ।
पत्रं पुष्पं फलं तोयं सबैलाई सुहाउँछन् ।।

सुन्तला पाकदा खेरि जस्तो सुन्दर दृश्य छ ।
भिस्सिएको त्यसै भित्र बुहारीको बिलाप छ ।।

बुहारीले लिएका छन् आँखामा आँसका भल ।
पीठमा धानको भारी हातमा सुन्तला फल ।।

हिमाल तिर फर्केर विरही गीत गाउनु ।
तातेको छातिको चोलो आँसुद्वारा भिजाउनु ।।

खेतमा धान काटेर आलीमा गै बिसाउनु ।
पोल्टाबाट निकालेर सुन्तला लिई चाखनु ।।

बुहारीहरूका निम्ति यौटा आनन्द यत्ति छ ।
यत्ति पाइन्न ता हाय ! दुःख यो ज्यातिबित्ति छ ।।

न बोल्ने घाँसको डोको, हँसिया हात काटने ।
थाप्लो खाने खरो नाम्लो गाग्री क्यै नभनी रुने ।।

यस्ता विरसिला साथी भोगेका जसले थिए ।
उनैलाई विधाताले रसिला सुन्तला दिए ।।

हाँस वा रोऊ वा खेल, खाऊ वा म्वाञ्ची खाउ वा ।
जे गरेपनि छन् राजी दुःखियासँग सुन्तला ।।

यो पापी मनको ताप यदि कोही बुझाउँछ ।
कि ठूला सन्तकोवाणी कि यही सुन्तला त छ ।।

पाकेका सुन्तलालाई सम्झन्छ मनले जब ।
सम्झिन्छ दाँइहालेको काटेको धान वैभव ।।

सधैं टल्कन्छ त्यो ताल सधैं हाँस्छ हिमालय ।
सधैं ती छहरा नाँच्छन् सधैं गङ्गा सुसाउँछ ।।

सधैं छ वनको शोभा सधैं कमल–पोखरी ।
को पाउँछ ? हरे खान सुन्तला यी सधैं भरी !।।

यसरि सुन्तला खाइयो सखे !
अब त अन्त्यमा चाख्नु पो छ के ?
तदपि क्य कुरा भन्छु हे यहाँ
मिलन भैरहोस् ! काव्यमार्गमा ।।

अष्टम सर्ग

# अन्त्यमा

भिन्नै भिन्नै गरी हेर्‍यौं यहाँको रसिलो धरा ।
फर्की हेरौं मिसाएर कति राम्रो छ पोखरा ? ।।

टिल्पिली टल्किने ताल भिलिमली झल्किने हिम ।
झर्झरी झरने झर्ना हल्हली हल्कने वन ।।

गड्गडी गड्किने गङ्गा गम्किने दिव्य पङ्कज ।
पोखरा रमणीका छन् कस्ता सौन्दर्य वैभव ? ।।

चूनाले उत्तरी भित्तो पोतो पारी झकाझक ।
बगैंचाका गलैंचाले सिंगारीकन बैठक ।।

चरा चुरुङ्गिका गाना चारै तरफमा छरी ।
श्याम बादलका पर्दा लाउँदै खोल्दै गरी ।।

हावाद्वारा नचाएर लता वृक्ष थरी थरी ।
रङ्गमञ्च सरी चल्छ यहाँ नाटक कस्तरी ? ।।

क्या राम्रो तबला-ताल गडकीबाट आउँछ ।
कस्तो हार्पिनको गाना कोइलीले बजाउँछ ।।

झर्ना सीतार झैं कस्तो जल–ताड़ँन जान्दछन् ?
शास्त्रीय गीतको ढाँचा खोला क्या ठीक्क ल्याउँछन् ? ।।

क्या राम्रो मुजुरा ठोक्छन् सधैं झ्याउँकिरी किरी ।
झ्याउरे गानको तान मैना ल्याउँछ कस्तरी ?।।
भूँ भूँ पटहको नाद भमरा कति ल्याउँछन् ?
नाच्दै पद्मका फूल क्या संसार भुलाउँछन् ! ।।
क्या राम्रो गम्किएको छ यी राम्रा तालको छवि ।
झल्काई सुकिला दाँत क्या हाँस्छन् हिमका चुली ।।
क्या हेर्छन् नक्कली तारा साथमा ली निशाकर ।
ऊषा सन्ध्या अँगालेर क्या हाँस्छन् नि दिवाकर ? ।।
कलिला पालुवा लाग्दा क्वैलीले गीत गाउँदा ।
हरिया वनका माथि जेठका घाम चर्कंदा ।।
गडङ् डङ गर्दै कालो बादल आई वर्षंदा ।
सुकेका छहरा सेतै धमिलै भई गर्जंदा ।।
खोला नाला कुला खोल्सा सबैमा बाढी आउँदा ।
असारे गीत गाएर पिपिरे धान रोपँदा ।।
जता हेर्‍यो उतै राम्रो हरियो घाँस टल्कँदा ।
पाखामा कुहिरो लाग्दा खेतमा धान गोडँदा ।।
पहेंला धानका बाला झुल्दै लहलहाउँदा ।
पाकेका सुन्तला खाँदै दाइँहालेर नाचदा ।।
जौं, तोरी, गहुँ बारीमा सेताम्मै शीत वर्षंदा ।
पँहेलै तोरि फुल्दा र हिमले घाम तापँदा ।।
सधैं रमाइलो लाग्छ यो राम्रो पोखरा पुरी ।
सबै सुहाउँदो रैछ राम्रो ज्यान परेपछि ।।
कुन मैन्हा छ ख्वै त्यस्तो पोखरा यो न गम्कने ?
कुन मान्छे छ ख्वै त्यस्तो यहाँ आई न नाचने ? ।।

'के हो प्रकृतिको शोभा ? के छ तत्व हिमालको ?
के माहात्म्य छ शुक्लाको के छ गौरव तालको ? ।।
तालका बीचमा टापू जो बन्यो कसरी बन्यो ?
चराका गणले गीत गाउँदै के कुरा भन्यो? ।।
छहरा पहरा फोरी त्यसरी छल्किए किन ?
लहरा फूलका भुल्दै वृक्षमा टाँसिए किन ? ।।
गहमा शीतका आँसु लिए यी फूलले किन ?
परे शरणमा हाम्रा पशु पन्छीहरू किन ? ।।
सविता सूर्यले आफ्ना पवित्र किरणै कन ।
ऊँच नीच न शोचेर सबै तर्फ छरे किन ? ।।
ध्यान मग्न सरी बस्छन् पाखा पर्वत यी किन ?
हृदयी ! पोखरा हेर्दा यी कुरा मनमा गम ।।
चरा सित सँगै गाई आँसु आँखा भरी भर ।
न भाँची कलिला हाङ्गा फल फूल लिने गर ।।
ढुङ्गा माथि बसी रोऊ छहरा सित बेसरी ।
पखाल मनका पाप यहीं आएर राम्ररी ।।
गुलेली, धनु, बन्दुक लिएका छौ भने सखे !
फालिदेऊ क्षमा माग आँसु लाग्लान् कठै भरे ।।
ए पाखा ! ए लता वृक्ष ! ए चरा ! छहरा धरा !
माफी देऊ पऱ्यो पाऊ यौटा ब्याधा कठै बरा ।।
भनी प्रकृतिका सामू रोऊ पाउ परी कन ।
मान्छे बनेर जन्म्यौ त बाँच मान्छे बनी कन ।।
चराका बचरालाई चारा देऊ दया लिई ।
उफ्रका मृग-पाठाको म्वाञ्गी खाऊ खुशी भई ।।

न छोऊ कोपिलालाई हातको दाग लागला ।
न खाऊ बचिला साथी ! कठै त्यो के चिताउला ।।

यी राम्री वनकी बाला मनले मात्र भोग्य छन् ।
आँखाका पुतली मात्र पुतली छुन योग्य छन् ।।

तर्क ध्यान दया ज्ञान लिई हेर सबै तिमी ।
खान लाउनकै निम्ति ह्वैन मानवको जुनि ।।

प्रेमले हरिणी-झांक लागून् आँखा कन्याउन ।
भमरा भमरी लागून् मह खान र ख्वाउन ।।

भाले पोथी मिली खेलून वृक्षका खोपिमा लुकी ।
भाऊ ! तिमी पनी साथी मिली दम्तर दम्पती ।।

तिम्रा त्यो खेलमा बाधा न पारून् बाघ भालुले ।
तिम्रा कारणले आँसु न झारुन् यी मयालुले ।।

पहिले भावना प्रेम ज्ञानले रसिला वन ।
अनि प्रकृतिको साथी ! गर सादर चुम्बन ।।

नत्र जो दिव्य सौन्दर्य हाँस्छ रुन्छ र बोलदछ ।
ढुङ्गो, माटो, चीसो झाडी, खहरे मात्र बन्दछ ।।

अभियन्ताहरूलाई छ चीसो हिम-माधुरी ।
दाउरेहरूका लागि छ काँचो वन–माधुरी ।।

माछा मार्नेहरूलाई छ नीलो ताल–माधुरी ।
परीक्षार्थीहरूलाई छ गार्‍हे काव्य–माधुरी ।।

चश्माकै दोष हो साथी ! सबैको एक दृष्टि छ ।
आफ्नो हृदय जस्तो छ त्यस्तै सम्पूर्ण सृष्टि छ ।।

केटाकेटी हुँदा आफू बाबू–आमा सबै थिए ।
ऐंल्हे मानिसका जोडी क्या राम्रा दम्पती भए ! ।।

पछि हामी हुँदा बृद्ध छोरा–छोरी हुनन् सब ।
आफ्नै हृदयमा साथी ! सारा संसार छैन त ?'।

अर्काका बाबु-आमाले आफ्ना पुत्रहरूकन ।
राम्रा राम्रा दिंदा नाना लोभिन्थ्यो पहिले मन ।।

ऐल्हे मुसक्क हाँसेर बोलेका नव–दम्पती ।
देख्दा ईर्ष्या गरीहाल्छ हाम्रो यो चञ्चले मति ।।

पछि छोरा बुहारीको सेवा सुन्दर पाउने ।
वृद्धका साथमा होला हाम्रो जिब्रो रसाउने ।।

यसर्थ विश्व यस्तै छ यस्तै छौं दुनियाँ सब ।
यस्तै हो यहि हो भन्ने ठोकुवा के गरौं ? अब ।।

बरु प्रकृतिका काख खेल्दै–खेल्दै मरौं सखे !
जीवन्मुक्ति कहीं हुन्छ भने हुन्छ यहीं बसे ।।

सौन्दर्य हो परं ब्रह्म गर यस्को उपासना ।
सौन्दर्योपासना द्वारा छुट्तछन् भव वासना ।।

अनन्त विश्व-निर्माता, अनन्त–परमेशका ।
हामी अनन्त प्राणीका भावना छन् अनन्तका ।।

कहिल्यै यसले साथी ! सकिन्नन् दिव्य-गन्थन ।
हाँसियो रोइयो जे भो गरौं वार्ता विसर्जन ।।

यो काव्य काव्यका निम्ति लेखेको व्हैन तैपनि ।
के के लेखें भनें के के ? के के आए यहाँ ध्वनि ।।

तर जे ब्रह्मले देख्यो त्यही लेखें भनीकन ।
केही सन्तोषको सास भने फेर्दैछु मन्मन ।।

यात्री ! मिल्काऊ यो काव्य आऊ हेर्न स्वयं छिटो ।

लेखेको पोखरा भन्दा देखेको पोखरा मीठो ।।

यो हो हृदयको फूल,
कविको काव्य होइन ।
आशा छ यसको भूल,
कसैलाई बिभोइन ॥

×नवम सर्ग×

# पुनश्च:

यी राम्री हिम बालाको विवाहै हुन बाँकी छ ।
विवाह नगरी यिनको न खुल्ने रूप राशि छ ।।

यिन्को विवाह गर्ने हो भने देखि छिटै अब ।
कोरी बाटी टिका टाला पैऱ्हाइ दिनु पर्दछ ।।

केरा आदि लगाएर कदली स्तम्भ मण्डित ।
चाँडै बनाइनु पर्छ यिन्को विवाह मण्डप ।।

अनि पोतेसरी चिल्ला पक्की बाटा बनाइउन् ।
चूरा झैं गोल उद्यान ठाउँ ठाउँ सजाइउन् ।।

सिंदूरे फूलका बाग बनून् सिंदूर माथमा ।
बिजुलीका बनन् माला छातीमा र कपालमा ।।

दुलही स्नानका लागि सेती र तालका तट ।
बनून् पक्की सफा शुभ्र संग मर्मर मण्डित ।।

उद्योग कल कार्खाना यज्ञ धूम मडारियोस् ।
अज्ञान, रोग, अन्याय, कसिंगर बढारियोस् ।।

गरी कपासको खेती पछ्यौरी फर्फराइयून् ।
सून खानि खनाएर गहना छन्छनाइयुन् ।।

बजून् उद्योगका बाजा पंचेबाजा सबै तिर ।
पाकून् व्यञ्जन चौराशी चौराशी खेत मन्तिर ।।

जागोस् संस्कृति आदर्श लोक गीत र मागल ।
मीठो स्वागतले जन्ती बनून् आनन्द पागल ।।

सबै हाँसौं सबै खेलौं भन्ने वैदिक वाक्यको ।
पुरोहितहरू गाउन् यज्ञ गीत मीठो मीठो ।।

जागोस् राष्ट्रियता खाँडो बनून् दर्शक निर्भय ।
पढून् सम्पूर्णाले मीठो विवाह श्लोकका लय ।।

पुगोस् संसारका सारा बन्धुलाई निमंत्रणा ।
बनून् आराम विश्राम गर्ने ठाउँ जहाँ तहाँ ।।

नव सुन्दरता पूर्ण सदा स्वागत तत्पर ।
तयार पारियुन् चाँडै प्रशस्त पाहुना-घर ।।

तब यो पोखरा-रानी मीठो मुस्कान लीकन ।
हेर्निन् चञ्चले आँखाले हर्दै संसारको मन ।।



पुनश्च